स्वाद्ध्यायशालाकुटुम्बको स्वधर्मसन्देश (२)

# वैदिक-मन्त्र-सङ्ग्रहका सात मन्त्रहरुका विषयमा प्रचारित भ्रमको निराकरण




पथिकृत्

**शिवराज आचार्य कौण्डिन्न्यायन,** आचार्य, एम्.ए., विद्द्यावारिधि, वाचस्पति(डि.लिट्.)

कार्यकर्ताहरु

**देवी आचार्यानी घृतकौशिकी**
**आमोदवर्धन कौण्डिन्न्यायन,** शुक्लयजुर्वेदाचार्य
**वेदवती काश्श्यपी**
**प्रमोदवर्धन कौण्डिन्न्यायन,** धर्ममीमांसाचार्य
**सुमोदवर्धन कौण्डिन्न्यायन,** ब्रह्ममीमांसाचार्य
**सम्मोदवर्धन कौण्डिन्न्यायन**
**वशवँ्वदाम्बा कौण्डिन्न्यायनी**
**अतिसम्मोदवर्धन कौण्डिन्न्यायन**
**ऐन्दवी कौण्डिन्न्यायनी**

प्रमुख सहयोगिहरु

**वासुदेव शाण्डिल्ल्यायन,** शुक्लयजुर्वेदशास्त्री, एम्.ए.
**प्रियवँ्वदाम्बा कौण्डिन्न्यायनी,** इतिहासपुराणाचार्या, एम्.ए.
**प्रणव शाण्डिल्ल्यायन**

**स्वाद्ध्यायशाला**

**च.२/४१९ सरस्स्वतीमार्ग, लाजिम्पाट्, काठमाण्डु–२, नेपाल, दूरस्वन ४३३३२७।**
**कृष्णयुगाब्द ५०६४, वैदिक इद्वत्सर दक्षिणायन हेमन्त सहस्स्यशुक्लपौर्णमासी**
**(२०५६)** मूल्य रू.१०।-

## स्वाद्ध्यायशालाकुटुम्बको स्वधर्मसन्देश (२)

# वैदिक-मन्त्र-सङ्ग्रहका सात मन्त्रहरुका विषयमा प्रचारित भ्रमको निराकरण

"विद्वांसो यदि मम दोषमुद्गिरेयुर् यद् वा ते गुणगणमेव कीर्तयेयुः ।
तुल्यं तद् बहु मनुते मनो मदीयं कष्टं तद् बत मनुते यदाह मन्दः ॥"

महेन्द्र-संस्कृत-विश्वविद्यालयको मध्यमाञ्चल-विकासक्षेत्रको शास्त्रानुसन्धान-परिषद् भन्ने, अगि प्रकाशित नामावलिका कुनै सदस्य बितिसकेकाले र वर्तमान कालमा कोको सदस्य भन्ने कुरा प्रकाशित नभएकाले उत्तरदायित्व राम्ररि स्पष्ट नभएको परिषद्का नामबाट प्रकाशित भएको, प्रकाशनवर्ष वि.सं.२०५६ 'आषाढ शुक्ल, निर्जलाएकादशी' भन्ने नमिल्दो उल्लेख भएको 'मर्यादा' भन्ने वार्षिकपत्रिकाजस्तो पुस्तक २०५६।४।२ मितिमा हाम्रा दृष्टिमा पऱ्यो।

तेसमा प्रा.डा. रामचन्द्र गौतमको "वैदिक-मन्त्र-सङ्ग्रहका अशुद्ध सङ्कल्प-वाक्यहरु" भन्ने, एउटा सुसङ्घटित निकायका प्रकाशनलाइ नसुहाउने र संस्कृत भाषाका गौरवको उपहास गर्ने मुद्रणाऽशुद्धिहरुले भोरिएको लेख प्रकाशित भएको रछ। तेस लेखमा स्वाद्ध्यायशालाबाट २०५२ संवत्मा प्रकाशित माद्ध्यन्दिनीयवाजसनेयि-शुक्लयजुर्वेद-शाखाद्ध्यायि-निरग्निकद्विज-सदाचारकर्म-संस्कारकर्म-श्राद्धकर्मादि-वैदिक-मन्त्र-सङ्ग्रहमा प्रकाशित सात मन्त्रवाक्यहरुका विषयमा अबोधादिमूलक र भ्रमजनक टिप्पणीहरु उक्त लेखका लेखकादिको वैदिक-मन्त्र-सङ्ग्रहकार प्रतिको पूर्वाग्रहलाइ व्यञ्जित गर्ने र एउटा उत्तरदायि निकायका प्रकाशनलाइ नसुहाउने शैलीमा प्रस्तुत गरिएका रछन्। प्रकाशित ग्रन्थका कुनै पनि पक्षमा वस्तुतत्त्वमा प्रकाश पार्ने सद्भावनाले विवेकपूर्ण टिप्पणी गर्नु स्वागतयोग्य कुरा मान्नपर्छ। टिप्पणीकर्ताबाट ईर्ष्याद्वेषादिवशीभूत भएर वा अविवेकपूर्ण रूपमा भ्रमजनक र पूर्वाग्रहपूर्ण टिप्पणी गरिएमा भने तेसमा स्पष्टीकरणको आवश्यकता पनि पर्न जाञ्छ। उक्त लेखमा गरिएका टिप्पणीहरुले पनि स्पष्टीकरणको आवश्यकता देखाएकाले तल प्रस्तुत गरिएका सङ्क्षिप्तै स्पष्टीकरणबाट पनि आधुनिक प्रमाणपत्रवाला उपाधिको र धन-मान-पदादिको तत्त्व बुजेका तथा वैदिक मूल मार्गमा आस्था भएका व्यक्तिहरुको भ्रम अवश्य हट्ला भन्ने विचारले वस्तुस्थितिको सङ्क्षिप्त स्पष्टीकरण तल प्रस्तुत गरिँदैछ।

### ऋचालाइ मात्र मन्त्र भनिञ्छ भन्ने कुरा हैन

वैदिक-मन्त्र-सङ्ग्रहका "प्रेतायोदकस्स्य सकृत् प्रसेचने मन्त्रः" इत्यादि वाक्यहरुमा "असम्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत एतत् त उदकम्" (पृ.५६) इत्यादि वाक्यलाइ मन्त्र भनिएको कुरा उचित भएन भन्दै धर्मशास्त्राचार्य प्रा.डा.महाशयले *"प्रेतश्राद्धादिमा*

*सम्बोधन, स्तुति वा प्रार्थनापरक वेदका ऋचालाई मात्र मन्त्र भनिन्छ"* भन्ने कुरा लेख्नु भएको रच (मर्यादाको उक्त लेख, पृ.४१)। वाँहाँका कुराबाट त यजुर्वाक्यहरु मन्त्रै नमानिने भए। एसबाट त वाँहाँले आँफुलाइ माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदशाखाको विशेष विवेकि ज्ञाता तथा अध्येता देखाइ यजुर्वेद प्रति अति ठुलो श्रद्धा र सम्मान गरेको र वेद-वेदाङ्गशास्त्रको वाँहाँले अति राम्रो अनुशीलन गरेको पो देखिन आयो!! वाँहाँको मन्त्रको लक्षण मान्दा त कात्यायन ऋषिले श्रौतसूत्रमा "ऋचो यजूंषि सामानि निगदा मन्त्राः" (१।३।१) भन्ने सूत्र बोल्नुभएकामा त्यो त कात्यायन ऋषिको पटमूर्खताको द्योतक मान्न पर्ने पो हुन आयो !! एस स्थितिमा डा.महाशयको *"वेदका ऋचालाई मात्र मन्त्र भनिन्छ"* भन्ने भनाइ कति विद्वत्तापूर्ण हो वेद-वेदाङ्गमा श्रद्धा गर्ने र ऋषि-मुनि-विद्वान्हरु प्रति आदर गर्ने विवेकशील अध्ययनशील पाठकहरुले बुज्नुहुने नै छ।

## "उदकं करिष्यामहे" इत्यादि वाक्यलाइ मन्त्र भन्ने भाष्यकारादि सबै अज्ञ नै हुन् त ?

डा.महाशयले भने झैँ वेदका ऋचा मात्र मन्त्र भनिने भए "उदकं करिष्यामहे" इत्यादि ऋचाभिन्न वाक्यलाइ पनि मन्त्र भन्ने पारस्करगृह्यसूत्रभाष्यकार कर्कोपाध्याय, जयराम, हरिहर, विश्वनाथ, गदाधर; कातीयगृह्यकारिकाकार रेणुदीक्षित, चतुर्वर्ग-चिन्तामणिकार हेमाद्रि, पराशरमाधवीयकार माधवाचार्य, शतपथब्राह्मणव्याख्याकार सायणाचार्य, वीरमित्रोदयकार मित्रमिश्र इत्यादि सबै नै अज्ञ नै हुन् त ?

के "तमुदकं याचन्ते उदकं करिष्यामहे इत्यनेन *मन्त्रेण" (पा.गृ.भाष्य ३।१०, पारस्करगृह्यसूत्रको गुजराति प्रिण्टिङ् प्रेस्को वा मुन्शीराम-मनोहरलालको संस्करणको भाष्यपञ्चकयुक्तपुस्तक, पृ.३६३),* "असावेतत् त इत्यनेन *मन्त्रेण"* (पूर्ववत्) "तामेवैकां रात्रीं क्षीरोदके कृत्वा विहायसि आकाशे निदध्युः प्रेताऽत्र स्नाहीत्यनेन *मन्त्रेण"* (पूर्ववत्) इत्यादि भन्ने विख्यात भाष्यकार **कर्कोपाध्याय,** "तं वा उदकम् उदकदानाज्ञां प्रार्थयेरन् उदकं करिष्यामह इति *मन्त्रेण"* (पा.गृ.भाष्य ३।१०, पृ.३६६), "असावेतत् त इति *मन्त्रेण* जलाञ्जलिदानम्" (पूर्ववत्), "प्रेताऽत्र स्नाहीत्येतावता *मन्त्रेण"* (पूर्ववत्) इत्यादि भन्ने भाष्यकार **जयराम**; "तं वोदकं याचेरन् प्रार्थयेरन् उदकं करिष्यामह इत्यनेन *मन्त्रेण"* (पा.गृ.भाष्य ३।१०, पृ.३६९), "असौ अमुक प्रेत एतत् ते उदकमित्यनेन *मन्त्र*प्रयोगेण" (पूर्ववत्, पृ.३७०), "प्रेताऽत्र स्नाहीत्यनेन *मन्त्रेण"* (पूर्ववत्) इत्यादि भन्ने प्रसिद्ध भाष्यपद्धतिकार **हरिहर**; "उदकं करिष्यामहे इति *मन्त्रेण"* (पा.गृ.भाष्य ३।१०, पृ.३८०) भन्ने भाष्यकार **विश्वनाथ**; "समीपे स्थितं योनिसम्बन्धि(नं)शालकं वा उदकं करिष्यामह इति *मन्त्रेणो*दकं याचेयुः सपिण्डादयः" *(कात्यायनश्राद्धकल्पसूत्रभाष्य, पारस्करगृह्यसूत्रको भाष्यपञ्चक-युक्त पुस्तक, पृ. ४८९),* "ततः प्रेतमुद्दिश्यैकैकमञ्जलिं सकृद् भूमौ प्रक्षिपन्ति अमुकसगोत्राऽमुकशर्मन् प्रेत एतत् ते उदकमित्यनेन *मन्त्रेण"* (पूर्ववत्), "अथ यस्मिन्नहोरात्रे मृतो भवति तस्मिन्नेकस्मिन् मृन्मये पात्रे उदकं द्वितीये क्षीरं कृत्वा यष्ट्यादिकमवलम्ब्याकाशे धारयेत् अमुकसगोत्राऽमुकप्रेताऽत्र स्नाहि पिबेदमिति *मन्त्रेण"* (पूर्ववत्, पृ.४९०) इत्यादि भन्ने

भाष्यकार **गदाधर दीक्षित**; "वत्सगोत्राऽमुक प्रेत अयन् ते पिण्ड इत्यमुम्। दद्यात् समुच्चरन् *मन्त्रं* कुशेषु पितृयज्ञवत्" (कातीयगृह्यकारिका, पृ.१८३) भन्ने **रेणुदीक्षित**; "असाववनेनिक्ष्वेति *मन्त्रः*" (च.चि.श्राद्धकल्प, पृ.१४२४) भन्ने **हेमाद्रि**; "असावित्यमुकगोत्रामुकशर्मन्निति संबोध्य एतत् ते इति *मन्त्रेण* पिण्डदानं कुर्यात्" भन्ने **माधवाचार्य** (पराशरमाधवीय, प्रथमभाग, पृ.७५३), "असावेतत् ते इति पिण्डदान*मन्त्रः*" (शतपथव्याख्या २।४।२।१९) भन्ने **सायणाचार्य**; "तमुदकं याचेरन् उदकं करिष्याम इत्यनेन *मन्त्रेण*" (वीरमित्रोदय, शुद्धिप्रकाश, पृ.२००) भन्ने **मित्रमिश्र** इत्यादि विद्वान्हरु त ऋचाभिन्न "उदकं करिष्यामहे" इत्यादि ॠवाक्यलाइ पनि मन्त्र भन्नेवाला र कुनै पनि प्रमाणपत्रवाला उपाधि नभएका हुनाले उक्त प्रमाणपत्रधारि धर्मशास्त्राचार्य प्रा.डा.महाशयभन्दा कता हो कता तल्ला कोटिका चुत्था विद्वान् पो रचन् त भन्ने कुरा पनि विवेकशील पाठकहरुले हृदयङ्गम गर्न सक्लान् त ?

## सङ्केतित स्थलहरुमा मन्त्र छन्

*'**प्रेतायोदकस्स्य सकृत् प्रसेचने मन्त्रः**' इत्यादि वाक्यमा दिइएका स्थलसङ्केतहरुमा सङ्केतित सूत्रहरु र ब्राह्मणवाक्यहरु सङ्कल्पवाक्य होइनन्* भन्ने पनि डा.महाशयको भनाइ रछ (मर्यादा, पृ.४१-४२)। वैदिक-मन्त्र-सङ्ग्रहका उक्त स्थलसङ्केतहरु सङ्कल्पवाक्यका स्थलसङ्केत हैनन्। मन्त्रवाक्यका नै स्थलसङ्केत हुन्। उक्त प्रेतोदकदानादिवाक्यलाइ कर्कोपाध्याय-जयराम-हरिहर-गदाधर-विश्वनाथहरुले र रेणुदीक्षित-हेमाद्रि-माधव-सायणादिले पनि एकमुखले मन्त्र भनेका छन्, डा.महाशय सङ्कल्प भन्नुञ्च। कुन कुरा मान्ने भनि विवेकशील पाठकहरुले आँफै निर्णय गर्नुहुने छ। वैदिक-मन्त्र-सङ्ग्रहकारबाट चाइँ कर्कोपाध्यायादिको नै अनुसरण गरिएको रछ भन्ने कुरा त माथिका विवरणबाट पाठकहरुले स्पष्ट गरि बुज्नुहुने नै छ। *वैदिक-मन्त्र-सङ्ग्रहका उक्त सङ्केतहरुमा सङ्केतित सूत्रहरु र ब्राह्मणवाक्यहरु केवल क्रियाविधानपरक प्रमाणवाक्य हुन् भन्ने र तिनले त उदकदान र पिण्डदानादि कृत्य गर्नुपर्छ मात्र भनेका छन्* भन्ने पनि डा.महाशयको भनाइ रछ (मर्यादा, पृ.४२)। किन्तु वाँहाँको भनाइ सर्वथा अयथार्थ देखिञ्छ। उदाहरणका लागि "प्रेतायोदकस्स्य सकृत् प्रसेचने मन्त्रः" भन्ने शीर्षकमा वैदिक-मन्त्र-सङ्ग्रहमा (पृ.५६) दिइएको सङ्केतअनुसारको पारस्करगृह्यसूत्रका स्थलमा (३।१०।२१) भएको "प्रेतायोदकं सकृत् प्रसिञ्चन्त्यञ्जलिनाऽसावेतत् त उदकमिति" भन्ने सूत्रलाइ लिन सकिञ्छ। एस सूत्रमा "असावेतत् त उदकम्" यो मन्त्र भएको कुरा सूत्रग्रन्थकै 'इति'शब्दले जनाएको छ र "असावेतत् त इत्यनेन *मन्त्रेण*" भनेर उक्त सूत्रका भाष्यकार कर्कोपाध्यायले (पृ.३६३), "असावेतत् त इति *मन्त्रेण* जलाञ्जलिदानम्" भनेर भाष्यकार जयरामले (पृ.३६६) र "असौ अमुक प्रेत एतत् ते उदकमित्यनेन *मन्त्रेण*" भनेर भाष्यकार हरिहरले (पृ.३७०) भनेको देखिञ्छ। श्रुतिसूत्रमा दिइएका मन्त्रमा सम्बन्धिशब्दविशेष-नामविशेष-शर्मादिशब्दविशेष-गोत्रविशेष-स्वरूपविशेषको निवेश गर्न निमिलेकाले तिनको यथोचित रूपमा निवेश गर्न असौ पदले सङ्केत गरिएको हो । अब विवेकशील पाठकहरुले *वैदिक-मन्त्र-सङ्ग्रहमा सङ्केतित*

*स्थलहरुमा सम्बद्ध मन्त्र दिइएका छैनन्* भनि उक्त डा.महाशयले बोलेका कुरामा पत्यार गर्नुहुञ्छ कि वैदिक-मन्त्र-सङ्ग्रहकारका भनाइमा पत्यार गर्नुहुञ्छ त्यो पाठककै अधीनमा छ। उपर्युक्त प्रकारकै विवरण अन्य सङ्केतस्थलहरुका सम्बन्धमा पनि प्रस्तुत गर्न सकिञ्छ। उक्त विवरणबाट धर्मशास्त्राचार्य प्रा.डा.महाशयले धर्मशास्त्रका पाठचक्रममा अगिदेखि नै रैआएको पारस्करगृह्यसूत्रका सम्बद्ध सूत्रको सोजो अर्थ सम्म पनि पक्रन नसकेको कुरा स्पष्ट रूपमा देखिञ्छ। यो कुरा आजभोलिका परीक्षाका उपाधि पाएका र शासकाधीन पदविशेषमा आसीन भएका व्यक्तिको शास्त्रज्ञानको स्थिति कस्तो सम्म हुनसक्तोरच भन्ने कुराको एउटा निदर्शन नै हुन आएको छ।

## रुद्रधरादिका प्रेतोदकदानवाक्यहरु पारस्करगृह्यसूत्रका अनुकूल छैनन्

वैदिक-मन्त्र-सङ्ग्रहमा दिइएका प्रेतलाइ उदक दिने मन्त्रका स्थानमा प्रयुक्त गर्न पर्ने भनेर डा.महाशयले *अच्युत, अस्खलित, उच्चतम उपाधिले विभूषित, गहनतम महत्त्वपूर्ण उत्कृष्ट एवम् प्रामाणिक ग्रन्थ बनाउने, दोषज्ञ, शास्त्रमर्मज्ञ, विपश्चित् अतिविशिष्ट प्रकाण्ड विद्वान्* भनि मानेका विद्वान्हरुले देखाएका विभिन्न वाक्यहरुको उक्त लेखमा डा.महाशयले किन उद्धरण दिन सक्नुभएन ? हेमाद्रि-हरिहर-गदाधर-विश्वनाथहरुले प्रेतोदकदानवाक्यका स्वरूप कस्ताकस्ता देखाएका छन् भनेर स्थलसङ्केतसहित उद्धरण किन दिनुभएन भन्ने कुरामा पनि पाठकहरुको ध्यान जानु आवश्यक देखिञ्छ। वाँहाँले उद्धृत गर्न नसकेका समेत कतिपय विचारणीय वाक्यहरु तल उद्धृत गरिञ्छन्–

(क) “ॐ अद्याऽमुकगोत्र पितरमुकप्रेत एष तिलतोयाञ्जलिस्ते मया दीयते तवोपतिष्ठताम्।”
–श्राद्धविवेक, जयकृष्णदास हरिदासगुप्त, वाराणसी, सन् १९४८, पृ.६५;
–वायुनन्दनमिश्रकृत श्राद्धसङ्ग्रह, (हिन्दिअनुवादसहित), पृ.१७-१८।

(ख) “अद्यामुकगोत्राऽमुकप्रेतैष सतिलतोयाञ्जलिस्ते मया दीयते तवोपतिष्ठताम्।”
–सत्कर्मरत्नावली, प्रथमभाग, पृ.४९९।

(ग) “अद्येहामुकगोत्राऽमुकप्रेत चितादाहजनिततापतृषोपशमाय एष तिलकुशतोयाञ्जलिर् मद्दत्तस्तवोपतिष्ठताम्।”–नित्यानन्दपर्वतीय-विरचित अन्त्यकर्मदीपक,
चौखम्बा, बनारस, सं.२००९, पृ.३०।

(घ) “अद्येहामुकगोत्रामुकप्रेतैष सतिलतोयाञ्जलिस्ते मया दीयते तवोपतिष्ठताम्।”
–म.सं.वि.वि.को कर्मकाण्डभास्कर, संवत् २०५४; पृ.५३१-५३२
म.सं.वि.वि.को अन्त्यकर्मपद्धति, २०५६, पृ.५५।

शवदाहक्रियापछि स्नान गरेर प्रेतलाइ पानि दिने उपर्युक्त वाक्यहरु र तेस्तै प्रकारका डा.महाशयले आशौच-विवेचनमा (पृ.१६५) देखाएको “अमुक गोत्र अमुक प्रेत चितादाह-जनिततापतृषोपशमनाय एषः कुशतिलयुक्तो जलाञ्जलिर्मयादीयते तवोपतिष्ठताम्” भन्ने समेतका अरु वाक्यहरु पनि पारस्करगृह्यसूत्रमा (३।१०।२१) निर्देश गरिएका “एतत् त

उदकम्" भन्ने पदावलि अविकल रूपमा नराखि तेसका स्थानमा अरु नै पदावलि राखि मनपरि गरेर अनियमित रूपमा बनाइएका हुनाले स्वसूत्रकारका निर्देशको अनादर गर्ने हुँदा माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-शाखाध्यायि पारस्करगृह्यसूत्रानुयायिहरुका लागि सर्वथा त्याज्य हुन्; ग्राह्य हैनन्। शाखासूत्रको ठेगान नभएका, हृदय म्लेच्छसंस्कृतिमा ढल्नाले भावले पतित भैसकेका, शास्त्रधर्म छोडेर लोकधर्ममा मात्र भरगर्ने, नास्तिक अज्ञ दुर्ब्राह्मणादिले ति वाक्यको प्रयोग गरेपनि स्वशाखासूत्रको ठेगान भएका विज्ञ आस्तिक माध्यन्दिनीय-वाजसनेयि ब्राह्मणहरुले ति वाक्यको प्रयोग गर्न हुँदैन। पारस्करगृह्यसूत्रका अनुयायिहरुले जानिजानि स्वसूत्रकारको अनादर गरि आर्काका लहैलहैमा लागेर उक्त प्रकारका वाक्यको प्रयोग गरेमा प्रेतको उद्धार नहुने मात्र हैन, तेस्ता वाक्यको प्रयोग गर्नेवाला समेत नरकका कालकोठरिमा पर्नपर्ने हुञ्छ भन्ने कुरा कातीय-मन्त्रभ्रान्तिहर-सूत्रकारका "स्वशाखोक्तं परित्यज्य परशाखोक्तमाचरेत्। मिश्रितं वा प्रकुर्वीत सोऽन्धे तमसि मज्जति" (श्लो.१२) भन्ने वचनबाट र तेस्तै प्रकारका वसिष्ठ-व्याघ्रपाद-लौगाक्षि-छन्दोगपरिशिष्ट-विष्णुधर्मोत्तर-पुराणादिका वचनबाट पनि बुजिञ्छ। एति कुरा खोलेर बताएपछि त डा.महाशयले पनि कुरा बुज्नुहोला। जसले आँफ्ना शाखाका मन्त्र-ब्राह्मण-श्रौतसूत्र-गृह्यसूत्र-परिशिष्टहरुको महिमा राम्ररि बुजेको छैन र बुजेर पनि बुचपचाएको छ तेसैले मात्र उक्त प्रकारले कुरा खोलेर बुजाएपछि पनि एस विषयमा गजनिमीलिका गर्नसक्छ। तेस्ताको हामिसित कुनै ओखति छैन। स्वशाखामा विधान गरिएका धर्मकर्महरु मुख्य रूपमा स्वशाखाश्रुतिसूत्रानुसार नै गर्नपर्छ भन्ने कुरा वैदिक-मन्त्र-सङ्ग्रहका प्रस्ताविकामा (पृ.घ-ङ) सप्रमाण प्रतिपादित गरिसकिएको छ। एस विषयमा तल लेखिएका वचन पनि विशेष मननीय छन्–

न जातु परशाखोक्तं बुधः कर्म समाचरेत्।
आचरन् परशाखोक्तं शाखारण्डः स उच्यते॥

यः स्वशाखोक्तमुत्सृज्य परशाखोक्तमाचरेत्।
अप्रमाणमृषिं कृत्वा सोऽन्धे तमसि मज्जति॥–वसिष्ठवचन, संस्कारगणपति, पृ.१०।

यः स्वसूत्रमतिक्रम्य परसूत्रेण वर्तते।
अप्रमाणमृषिं कृत्वा सोऽप्यधर्मेण युज्यते॥–विष्णुधर्मोत्तरपुराण २।१२७।४८-४९।

स्वशाखाश्रयमुत्सृज्य परशाखाश्रयं तु यः।
कर्तुमिच्छति दुर्मेधा मोघं तत् तस्य चेष्टितम्॥–छन्दोगपरिशिष्ट १।३।२।

स्वशास्त्रे विद्यमाने यः परशास्त्रेण वर्तते।
भ्रूणहत्यासमं तस्य स्वशास्त्रमवमन्यतः॥–बौधायनश्रौतसूत्र २९।८, तृतीयखण्ड, पृ.३८०।

स्वगृह्यचोदितं कर्म द्विजः कुर्वन् कृती भवेत्।
अन्यथा पतितो भूयात् सर्वधर्मबहिष्कृतः॥–बृहन्नारदीयपुराण १।२४।१०।

छन्दोवदेव सूत्राणि भवन्ति खलु सूरिणाम्।
वेदोक्तमपि सूत्रोक्ततुलितं वैदिकोत्तमाः॥
नाऽङ्गीकुर्वन्ति वाढं वै सूत्रकारास्तु तेऽखिलाः।
सर्ववेदैकविज्ञानशालिनः किल वै यतः॥–लौगाक्षिस्मृति, स्मृतिसन्दर्भ, षष्ठभाग पृ.२७५।
बह्वल्पं वा स्वगृह्योक्तं यस्य यावत् प्रकीर्तितम्।
तस्य तावति शास्त्रार्थे कृते सर्वः कृतो भवेत्॥–प्रथमयज्ञपाश्र्व, श्लो.८२।
ऊनो वाऽप्यतिरिक्तो वा यः स्वशाखोदितो विधिः।
तेन सन्तनुयाद् यज्ञं न कुर्यात् पारतन्त्रिकम्॥–प्रथमयज्ञपाश्र्व, श्लो.८०।
श्रुतिस्मृत्युदितं कर्म विहितं वैदिकस्य यत्।
तदुक्तेनैव मार्गेण कर्तव्यं नाऽन्यथाऽऽचरेत्॥–कण्वस्मृति श्लो.६८, स्मृतिसन्दर्भ पृ.२८६६।
पूर्वैराचरितं कार्यं पूर्वे पितृपितामहाः।
प्रपितामहाद्यास् स्युस् ते, तैरशास्त्रं कृतं तु चेत्॥
तत् त्याज्यमेव सुतरां शाखीयं यत् तदाचरेत्।
स्वसूत्रोक्तप्रकारेण स्मार्तं कर्म श्रुतीरितम्॥–मार्कण्डेयस्मृति, स्मृतिसन्दर्भ, षष्ठभाग पृ.७४।
कल्पमेकं समाश्रित्य प्रवृत्तेऽपि च कर्मणि।
*न मिश्रयेत्* प्रयोगाँस् तान् कल्पयोरव्यवस्थयोः॥
–कृष्णभट्टकृता निर्णयसिन्धुसंस्कृतटीका, चौखम्बा वाराणसी, पृ.११७१।
प्रयोगः सूत्रकारोक्तो न समुच्चयमर्हति।
समुच्चये यतस् तस्य न निष्पत्तिर् न च क्रमः॥
–कर्मप्रदीपव्याख्या, एसियाटिक सोसाइटि, बङ्गाल, पृ.५२।
वेदमार्गानुसारी च परं वेदोक्तमेव हि।
करोति कर्म नाऽन्यत् तु गौणमुख्ये यथाबलम्॥
–कण्वस्मृति, श्लो.४००-४०१, स्मृतिसन्दर्भ पृ.२८९६।
स्वगृह्योक्तमनल्पं वाऽप्यल्पं यस्य प्रचोदितम्।
तावदेव तु कर्तव्यं तेन सर्वं कृतं भवेत्॥
यावदुक्तं स्वस्वगृह्ये न कृतं तावदेव तत्।
परोक्तं वा *विमिश्रं* वा कृतमप्यकृतं भवेत्॥–कातीयमन्त्रभ्रान्तिहरसूत्र श्लो.९२,९३।
प्रयोगशास्त्रं गृह्यादि न समुच्चीयते परैः।
प्रयोगशास्त्रताहानेरनारम्भविधानतः॥
बह्वल्पं वा स्वगृह्योक्तं यस्य कर्म प्रकीर्तितम्।
तस्य तावति शास्त्रार्थे कृते सर्वः कृतो भवेत्॥
–कर्मप्रदीपव्याख्या प्रभामा गृह्यपरिशिष्टवचन, एसियाटिक सोसाइटि, बङ्गाल, पृ.५२।

## हरिहर–गदाधर–विश्वनाथहरुका प्रेतोदकदानमन्त्र पारस्करगृह्यसूत्रका अनुकूल छन्

भाष्यकार हरिहर-गदाधर-विश्वनाथहरुले भने अन्य ग्रन्थका आधारमा अन्य पद्धतिकारहरुले बनाएका पद्धतिग्रन्थहरुबाट अविवेकले गर्दा सङ्ग्रह गरिएका, प्रायः स्वसूत्रमा नभएका, अन्य पदार्थको अनुष्ठानमा अरुहरुका बहकाइमा परि अन्यथा वाक्यप्रयोग गरेका भएपनि शवदाहक्रियापछि स्नान गरेर प्रेतलाइ पानि दिने वाक्य त स्वसूत्रकारका निर्देशको पालना गरेरै देखाएका छन्। जस्तै–

**(क) अमुकसगोत्राऽमुकशर्मन् प्रेत *एतत् ते उदकम्* ।**–हरिहरभाष्यपद्धति, पृ.३७३।

**(ख) अमुकसगोत्राऽमुकशर्मन् प्रेत *एतत् ते उदकम्* ।**

–कात्यायनश्राद्धकल्पसूत्र-गदाधरभाष्य, चतुर्थकण्डिका, क्रियापद्धति, पृ.४८९।

**(ग) अमुकसगोत्राऽमुकप्रेतै*तत् ते उदकम्* ।**–विश्वनाथभाष्य पृ.३८०।

उक्त उदकदानवाक्यहरुमा भाष्यकार हरिहरादिले 'उपतिष्ठताम्' वा 'ते मया दीयते तवोपतिष्ठताम्' भन्ने शब्दहरु जोडेका छैनन्। पाठकहरु भाष्यपञ्चकयुक्त पारस्करगृह्यसूत्रको गुजरातिप्रिण्टिङ्प्रेस्को वा मुन्शीराम-मनोहरलालका संस्करणको पुस्तक पल्टाएर हेर्न सक्नुहुञ्छ। हेमाद्रिले त तेस्तो वाक्य दिएको नै देखिएको छैन। एसबाट हरिहरादिले उक्त उदकदानवाक्यमा ति शब्द जोड्नु आवश्यक नै नमानेको देखिञ्छ। तसर्थ शवदाहोत्तर-प्रेतोदकदान-वाक्यका सम्बन्धमा *'हेमाद्रि प्रभृति समस्त विद्वान्हरूले ... "उपतिष्ठताम्" यो शब्द जोडी ... वाक्य बनाएका छन्'* भन्ने डा.महाशयको भनाइ (मर्यादा, पृ.४३) सरासर भुटो देखिञ्छ। उक्त वाक्यमा हरिहरादिले 'अद्य' वा 'अद्येह' 'चितादाह–जनिततापतृषोपशमाय' इत्यादिप्रकारका स्वसूत्रका पदले सूचित नगरेका शब्दहरु मनपरि जोड्ने काम पनि नगरेको कुरा पनि माथि दिइएका उद्धरणहरुबाट स्पष्ट छ। सूत्रको एतत् पदलाइ फेरेर 'एषः' बनाउने काम गरेर तथा 'उदकम्' पदलाइ हटाएर 'तिलतोयाञ्जलिः' वा 'सतिलतोयाञ्जलिः' वा 'तिलकुशतोयाञ्जलिः' भन्ने पद राखेर स्वसूत्रकारनिर्देशको अनादर गर्ने काम पनि रुद्रधर-सत्कर्मरत्नावलीकार-नित्यानन्द-दधिरामादिले झैँ हरिहरादिले गरेका छैनन्। एस कुरामा पनि विवेकशील पाठकहरुले राम्रो ध्यान दिनुहुने नै छ।

## "उपतिष्ठताम्" पदको प्रयोग सबैका लागि अनिवार्य हैन

**डा.महाशयको** *'जलाञ्जलि दिंदा मात्र होइन पिण्डदान, अवनेजनदान, तिलतोय पात्रदान र सूत्रदानादि प्रेतक्रियामा जति पनि कृत्य गर्नु पर्ने हुन्छ ती सबै संकल्पवाक्यको अन्तिममा उपतिष्ठताम् नै उच्चराण गर्नु पर्ने अकाट्य, अपरिवर्तनीय तथा सर्वमान्य शास्त्रीय व्यवस्था छ'* भन्ने पनि भनाइ रछ (मर्यादा, पृ.४३-४४)। किन्तु हरिहर-गदाधर-विश्वनाथहरुका पद्धतिहरुका माथि उद्धृत प्रेतोदकदानवाक्यहरुबाट भने उक्त महाशयले भने झैँ "उपतिष्ठताम्"-को उच्चारण अपरिवर्तनीय र सर्वमान्य नभएको कुरा स्पष्ट हुञ्छ।

पुनश्च डा.महाशयले संस्कृत-विश्वविद्यालयले प्रकाशित गरेका आशौच-विवेचनग्रन्थमा (पृ.१४५, १४६, १५०, १५१, १५२, १५९, १६०, १७३, १७८, १९२, १९३, १९९, २००, २०३, २०५) नित्यानन्दादिगतानुगतिकताको अवलम्बन गर्दै अविवेकपूर्णरूपमा गरुडपुराण मानेको १६ अध्याय भएको हिजोअस्तिका व्यक्तिले बनाएको *सारोद्धार-गरुडपुराणमा* हैन, बेङ्कटेश्वर-मुद्रणालयबाट प्रकाशित भएको मूल गरुडपुराणमा आएको वचनमा त प्रेतोदकदानवाक्यमा *तृप्यतु तृप्यताम् तर्पयामि उपतिष्ठताम्* इत्यादि पदहरुमा कुनै एक पदको उच्चारण हुने कुरा देखाइएको छ। एसबाट त गरुडपुराणमा *आँफ्ना-आँफ्ना शाखासूत्रका विधानअनुसार प्रेतोदकदान गर्ने वाक्यको उच्चारण गर्ने हो* भन्ने वेदमार्गको मूल सिद्धान्तलाइ राम्ररि हृदयङ्गम गरि तेसैको अनुसरण गरिएको देखिञ्छ। त्याँहाँ सबैले उपतिष्ठताम् नै भन्नु भनेको देखिँदैन। गरुडपुराणले वेदका सबै शाखासूत्रहरुका तृप्यतु तृप्यताम् इत्यादि सबै पदको सङ्ग्रह गर्नु सम्भव नभएकाले निदर्शनार्थ दुइ-चारोडा पद देखाएर दिक्प्रदर्शन गरेको बुजिञ्छ। त्याँहाँको वचन एस्तो छ–

दक्षिणाग्रहस्तयोस् तु कृत्वाऽथ सतिलं जलम्।
आदायाऽञ्जलिना याम्यां दुःखी पैतृकतीर्थतः॥
एकवारं त्रिवारं वा दशवारमथापि वा।
भूमावश्मनि वा सर्वे क्षिपेयुर् वाग्यताः खग॥
*तृप्यतु तृप्यतां* वाऽपि *तर्पयाम्युपतिष्ठताम्*।
प्रेतैतदमुकगोत्रेत्युक्तेष्वेवं समुच्चरेत्॥२।४।७५-७७।

छन्दोगपरिशिष्टमा *"तर्पयामि"* भन्ने पदको प्रयोग गर्नु भनिएको छ। जस्तै–

अथाऽनवेक्षयेत्यापः सर्व एव शवस्पृशः।
स्नात्वा सचैलमाचम्य दद्युरस्योदकं स्थले॥
गोत्रनामानुवादान्ते *तर्पयामी*त्यनन्तरम्।
दक्षिणाग्रान् कुशान् कृत्वा सतिलं तु पृथक्पृथक्॥३।३।१,२ (२२।१,२)।

यो वचन वीरमित्रोदयका शुद्धिप्रकाशमा (पृ.१९९) पनि उद्धृत छ। निर्णयसिन्धुका प्रेतोदकदानस्नानादिका प्रकरणमा पनि उक्त छन्दोगपरिशिष्टवचन र प्रचेताको "तत्र त्रिः प्रसेकं कुर्युः प्रेतस्तृप्यतु इति" भन्ने वचन पनि उद्धृत देखिञ्छ (निर्णयसागर, पञ्चमसंस्करण १९४९ सन्; पृ.४०८)। प्रचेताका वचनबाट प्रेतोदकदानवाक्यमा *'तृप्यतु'* भन्ने पदको प्रयोग हुने कुरा देखिन आउँछ। मिताक्षराकारले याज्ञवल्क्यस्मृतिव्याख्यामा (३।५) र देवण्णभट्टले स्मृतिचन्द्रिकाका आशौचकाण्डमा (पृ.९८) पनि "अमुकनामा प्रेतोऽमुकगोत्रस् *तृप्यतु*" भन्ने प्रेतोदकदानवाक्यमा 'तृप्यतु'-पदको प्रयोग देखाएका छन्। धर्मसिन्धुका प्रेतोदकदानवाक्यमा पनि 'तृप्यतु'-पदकै प्रयोग देखिञ्छ (निर्णयसागरमुद्रायन्त्रालय, १९०४ सन्; पृ.३४६)।

**डा.महाशयले** *"भगवान् श्रीरामले आफ्ना पिता राजा दशरथको मृत्युमा जलाञ्जलि प्रदान गर्दा पनि शास्त्रप्रवर्तक ऋषि श्रेष्ठ वशिष्ठादिको पूर्ण निर्देशनमा संकल्पवाक्यको अन्त्यमा '**उपतिष्ठताम्**' यही शब्द उच्चारण गरेको कुरा रामायणमा स्पष्ट लेखिएको छ"* (मर्यादा, पृ.४३) भनेर रामायणको भनि अधोनिर्दिष्ट श्लोक टिप्पणीमा दिएको देखिन्छ–

इदं पुरुषशार्दूल विमलं तोयमक्षयम्।
पितृलोकगतस्याऽद्य मद्दत्तमुपतिष्ठताम्॥

किन्तु एस श्लोकको हेमाद्रिका चतुर्वर्गचिन्तामणिका परिशेषखण्डका श्राद्धकल्पमा (पृ.१५८६) र निर्णयसिन्धुमा (पृ.४०८) उद्धृत पाठमा भने केइ महत्त्वपूर्ण पाठभेद देखिन्छ। जस्तै–

इदं पुरुषशार्दूल विमलं *दिव्य*मक्षयम्।
*पितृलोकेषु पानीयं* मद्दत्तमुपतिष्ठताम्॥

चौखम्बा वाराणसीका मूल मात्र भएका वाल्मीकिरामायणका संस्करणमा (संवत् २०१४, पृ.२६३) पनि एस श्लोकका पाठमा केइ महत्त्वपूर्णै पाठभेद देखिन्छ। जस्तै–

*एतत् ते राज*शार्दूल विमलं तोयमक्षयम्।
पितृलोकगतस्याऽद्य मद्दत्त*मुपतिष्ठतु*॥–अयोध्या.१०३।२७।

निर्णयसागरमुद्रणालयको तिलकव्याख्यायुक्तसंस्करणमा (पृ.३१८), गुजराति-प्रिण्टिङ्प्रेस्का रामायणतिलक-रामायणशिरोमणि-रामायणभूषण-टीकात्रयोपेत संस्करणमा (पृ.९६८), खेमराज-श्रीकृष्णदासका गोविन्दराजीयादि-व्याख्याचतुष्टयालंकृत तथा मुनिभावप्रकाशिकादिव्याख्योद्धृत-टिप्पणीसहित संस्करणमा र गीताप्रेसका संस्करणमा पनि चौखम्बाका संस्करणको जस्तै पाठ देखिन्छ। हेमाद्रिका र निर्णयसिन्धुका तथा माथि उल्लिखित रामायणका संस्करणहरुका पाठहरुसित राम्ररि मेल नखाने डा.महाशयको पाठचाइँ कुन संस्करणको हो जान्न पाइएन। वाँहाँकै कपोलकल्पित पाठ पो हो कि! जे सुकै भएपनि प्रेतोदकदानवाक्यको प्रयोग रामायणको उक्त प्रकारको काव्यवाक्यलाइ आदर्श मानेर गर्ने हो भने *"इदम्"* भन्ने कि *"एतत्"* भन्ने, *"उपतिष्ठताम्"* भन्ने कि *"उपतिष्ठतु"* भन्ने एस कुरामा अलिकति संशय नै रहने भयो। अण्णाशास्त्रिले "उपतिष्ठतु" भन्ने प्रयोग देखाएको पनि पाइन्छ। फेरि जलाञ्जलिदानकालमा निर्देशन गर्न रामका साथमा वसिष्ठ भएको कुरा वाल्मीकिरामायणबाट नदेखिएपनि *'शास्त्रप्रवर्तक ऋषि श्रेष्ठ वशिष्ठादिको पूर्ण निर्देशनमा उच्चारण गरिएको'* भनिएका (मर्यादा, पृ.४३) उक्त रामायणवाक्यमा दशरथको नाम नपरेको गोत्र उल्लिखित नभएको र प्रेतशब्द पनि नपाइएको हुनाले प्रेतोदकदानवाक्यमा नामादिको उच्चारण पनि नगरेपनि हुनि हो कि ? भगवान् रामले त ति शब्दको प्रयोग गरेनन् भने अरुले पनि नगर्न किन नहुनु ? पिण्ड दिँदा पनि रामले "इदं भुङ्क्ष्व महाराज" (अयोध्या.१०३।३०) भने जस्तै वाक्यको प्रयोग किन नगर्नु ? इत्यादि प्रश्न डा.महाशयसितै जिज्ञासु पाठकहरुले सोद्न उचित होला।

विभिन्न वेदशाखासूत्रहरुका विभिन्न विधानहरुमा र नानास्मृति-पुराणहरुका वचनहरुमा पनि दृष्टि दिने हामिहरुका विचारमा त रामायणको उक्त काव्यवाक्य विभिन्न वेदशाखाका अध्येताहरुका लागि आदर्श र अनुसरणीय हैन, त्याँहाँ आएको "उपतिष्ठताम्" वा "उपतिष्ठतु" पद पनि सर्वग्राह्य हैन। आँफ्ना-आँफ्ना शाखासूत्रादिअनुसार नै प्रेतोदकदानादिमन्त्रवाक्य वैदिकहरुका लागि उच्चारणीय हुन्। यो कुरा डा.महाशयले पडे-पडाएकै र अगिदेखि नै धर्मशास्त्रविषयको पाठचक्रममा रैराखेको ग्रन्थ निर्णयसिन्धुमा पनि रामायणको उक्त वाक्यको उद्धरणपछि आएको "दानवाक्ये विकल्पः" (पृ.४०८) भन्ने टिप्पणीले पनि सूचित गरेकै छ। वाँहाँका गवेषणात्मक अद्वितीय तीक्ष्णदृष्टिले वा वाँहाँले मानेका ऐले पनि भएका र वाँहाँलाइ अतियुक्तियुक्त टिप्पणी लेख्न बुद्धि दिने एवम् *प्रामाणिक ग्रन्थका निर्माता अतिविशिष्ट विद्वान्हरुका* सुतीक्ष्ण दृष्टिले पनि कसरि तेइ टिप्पणी पनि देख्न सकेन अचम्म लाग्छ। निर्णयसिन्धुका "दानवाक्ये विकल्पः" भन्ने वाक्यको व्याख्या गर्दै कृष्णशर्माले निर्णयसिन्धुका संस्कृतव्याख्यामा (पृ.१९९७) *'प्रेतोदकदानवाक्यमा प्रचेताका विधानमा "**तृप्यतु**" भन्ने पदको, बैजवापका विधानमा "**स्वधा**" भन्ने पदको, पारस्करका विधानमा "**असावेतत् त उदकम्**" भन्ने शब्दावलिको, हारीतका विधानमा "**तृप्यताम्**" भन्ने पदको र छन्दोगपरिशिष्टकार कात्यायनका विधानमा "**तर्पयामि**" भन्ने पदको प्रयोग हुने हुँदा तिति दानवाक्यहरुसित रामायणका दानवाक्यको विकल्पले प्रयोग हुञ्छ'* भनेर गरेको स्पष्टीकरण त वाँहाँहरुको अतितीक्ष्ण गवेषणात्मक दृष्टिले के देख्न सक्थ्यो र! व्याख्याको कुरा छोडम्, डा.महाशयले नै वृत्तिका निम्ति पडे-पडाएकै ग्रन्थ निर्णयसिन्धुका मूलमा नै अन्त्यकर्मनिरूपणप्रकरणका प्रारम्भमै लेखिएको शाखैपिच्छे अन्त्यकर्मको स्वरूप भिन्नभिन्न हुने कुरा जनाउने "प्रतिशाखं भिन्नेऽप्यन्त्यकर्मणि" (पृ.४०१) भन्ने वाक्यांशमा पनि किन वाँहाँहरुको दृष्टि पुगेन अचम्मै छ। डा.महाशय पाठचक्रमका ग्रन्थ कसरि पड्ने-पडाउने गर्नुहुञ्छ बुज्न सकिएन।

हेमाद्रिले पनि प्रेतोदकदानवाक्यका अन्त्यमा छन्दोगपरिशिष्टानुयायिहरुले "तर्पयामि" भन्ने, बैजवापवाजसनेयिहरुले "स्वधा" भन्ने, हारीतानुयायिहरुले "तृप्यताम्" भन्ने, ब्रह्मपुराणानुयायिहरुले "तृप्यतु" भन्ने समेत कुरा पनि देखाएकै छन् (श्राद्धकल्प, पृ.१५८४-१५८७)।

पारस्करगृह्यसूत्रका भाष्यकार हरिहर-गदाधर-विश्वनाथहरुले शवदाहोत्तर प्रयोज्य सम्बद्ध प्रेतोदकदानवाक्यमा "उपतिष्ठताम्" वा "उपतिष्ठतु" भन्ने पदको प्रयोग नदेखाएको, गरुडपुराणमा पनि तेसलाइ सबैका लागि आवश्यक नमानिएको समेत कुरा त माथि लेखिसकिएकै छ।

तेत्ति मत्रै पनि हैन, माध्यन्दिनीय-वाजसनेयिशाखाका कतिपय विवेकशिथिल गतानुगतिक पद्धतिकारहरुले स्वशाखासूत्रवाक्यस्वारस्यमा दृष्टि नपुऱ्याइ प्रेतोदकदानवाक्यमा "सतिलम्" "उपतिष्ठताम्" इत्यादि शब्द जोड्ने गरेको देखेरै होला १३२३ संवत्मा

कातीयगृह्यकारिका ग्रन्थ बनाउने, अनेक ग्रन्थमा आदरपूर्वक उल्लिखित गरिएका, बहुचर्चित ग्रन्थकार रेणुदीक्षितले प्रेतोदकदानवाक्यमा "सतिलम्" "उपतिष्ठताम्" नभन्नु भनेर कातीयगृह्यकारिकामा खोलेरै लेखेर गएको पनि देखिञ्छ। जस्तै–

स्नात्वा सचैलमाबध्य शिखामाचम्य वाग्यताः।
स्थले तस्य जलं दद्युर् नामगोत्रेण वाऽश्मनि॥
सव्योत्तराभ्यां पाणिभ्यामासीनाः पितृदिङ्मुखाः।
सकृत्सकृत् तिलैर् युक्तं सहैवाऽप्यार्द्रवाससः॥
वत्सगोत्रामुकप्रेतैतत् ते उदकमित्यतः।
न तिलोच्चारणं तेषां गुणत्वान् नोपतिष्ठताम्॥(पृ.१७७)।

निर्णयसिन्धुकारभन्दा पनि पुराना, बङ्गालका प्रसिद्ध धर्मशास्त्रनिबन्धकार गोविन्दानन्दले "ते मया दीयते तवोपतिष्ठतामित्यस्य प्रमाणाऽसिद्धत्वात्" (शुद्धिकौमुदी, एसियाटिक सोसाइटि, १९०५ सन्, पृ.१३१-१३२) भनेर 'ते मया दीयते' इत्यादि प्रकारको प्रयोग हेय हो भन्ने कुरा स्पष्ट रूपमा लेखेका छन्।

स्वसूत्रवाक्यस्वारस्य बुजेका हुनाले नै होला हरिहर-गदाधर-विश्वनाथहरुले माथि उद्धृत गरिएका प्रेतोदकदानवाक्यमा रुद्रधरादिले झैँ "सतिलम्" "उपतिष्ठताम्" इत्यादि शब्दको प्रयोग नगरेर सम्बद्ध सूत्रको निर्देशको रुद्रधरादिले भन्दा राम्ररि पालना गरेको देखिञ्छ। धर्मशास्त्राचार्य प्रा. डा.महाशयले पनि उक्त कुराहरु देख्न सक्नै पर्ने हो, अरु ग्रन्थका कुरा देख्न नसके पनि आँफुले वृत्तिका निमित्त समेत पडे-पडाएका पाठचक्रममा भएका मिताक्षरा-निर्णयसिन्धु-धर्मसिन्धु-हरिहरभाष्यहरुका कुरा सम्म त देख्न सक्नै पर्ने हो। के भएको होला। धर्मशास्त्राचार्य-प्राध्यापक-डाक्टर-पदादिका अहङ्कारका र ईर्ष्याद्वेषादिका तिमिरले गर्दा डा.महाशय अन्धै हुन पुग्नुभएको होला कि के होला !!!

## क्रियापदको प्रयोग नभएका पनि वाक्य हुञ्छन्

याँहाँनेर "असौ एतत् त उदकम्" एति मत्रै भन्दा त वाक्यमा क्रियापद नभएकाले वाक्य साकाङ्क्ष र अपूर्ण देखिञ्छ, तेस्ता अपूर्ण वाक्यले गरेको कृत्य कसरि फलदायि हुन सक्ला, तसर्थ वाक्य पूर्ण गर्न तृप्यतु, तृप्यताम्, तर्पयामि, उपतिष्ठताम् इत्यादिमा कुनै एक मिल्दो क्रियापद त जोड्नै पर्ला नि भन्ने शङ्का उठ्न सक्छ। एस्तो शङ्का डा.महाशयले पनि उठाउनु भएको छ (मर्यादा, पृ.४३)। तेस शङ्काका समाधानका लागि तल केइ लेखिञ्छ।

भाषाका स्वभावले कतैकतै कुनैकुनै वाक्यमा कुनैकुनै क्रियाहरु प्रसङ्गले तेसै बुजिने, तिनका वाचक क्रियापदको प्रयोग गरिरन नपर्ने पनि हुञ्छ। तेस्ता उदाहरणहरु विभिन्न भाषामा विभिन्न प्रकारका पाइञ्चन्। एस विषयमा अस् धातुको प्रथम पुरुषको क्रियापद अनुच्चरितै भएपनि तेसको अर्थ स्वतः बुजिने कुरा पाणिनीयव्याकरणका वार्त्तिककारका वचनको व्याख्या गर्दै भाष्यकार पतञ्जलि मुनिले पाणिनीयव्याकरणभाष्यमा स्पष्ट गरेका छन्। जस्तै–

अस्तिर् भवन्तीपरः प्रथमपुरुषोऽप्रयुज्यमानोऽप्यस्तीति गम्यते। वृक्षः प्लक्षः। अस्तीति गम्यते।–पा.व्या.भा.२।३।१, वार्त्तिक ११।

याँहाँ विचारणीय "असावेतत् त उदकम्" एस मन्त्रवाक्यमा "अस्ति" क्रियापदको अर्थ क्रियापदको प्रयोग नगरे पनि स्वतः बुजिने हुनाले तेस क्रियापदको सूत्रकारबाट प्रयोग नगरिएको र कर्कोपाध्यायादि कुनै पनि भाष्यकारबाट तेस मन्त्रमा इषेत्त्वादि मन्त्रमा झैँ क्रियापदको अध्याहार गर्नपर्ने कुरा नदेखाइएको बुजिञ्च। सन्निहित कुनै व्यक्तिलाइ सम्बोधन गरेर कुनै वस्तु यो तिम्रो हो वा तिमिलाइ हो भनेर दिएपछि उसले त्यो वस्तु मलाइ दिइएको हो भनेर स्वीकार्नु स्वाभाविक हुञ्छ। प्रेतक्रिया गर्ने व्यक्तिका समीपमा प्रेत घुमिरञ्च भन्ने कुरा पुराणहरुले बताएकै छन्। एस्तै वस्तुस्थितिको आकलन गरेर स्वसूत्रकारका "असावेतत् त उदकम्" भन्ने उदकदानवाक्यमा कर्कोपाध्यायादि भाष्यकारहरुले क्रियापदको अध्याहार नदेखाएका र हरिहर-गदाधर-विश्वनाथहरुले माथि उद्धृत प्रेतोदकदानवाक्यमा क्रियापदको प्रयोग नगरेका हुन्। क्रियापदको प्रयोग विना नै सूत्रमा विधान गरिएको उक्त प्रेतोदकदानमन्त्रवाक्य स्वार्थप्रतिपादनमा सर्वथा समर्थ छ र फलोत्पादक पनि अवश्य हुञ्छ। सूत्रको एस्तो वस्तुस्थिति नबुजि स्वसूत्रग्रन्थमा अपूर्णताको र फलजनकमन्त्रविधाना-ऽसमर्थताको आरोप लगाउनु मूर्खलाइ स्वाउने वा विद्वान्लाइ स्वाउने कस्तो काम हो पाठकहरुले पनि विवेक गर्नुहुने नै छ। डा.महाशयले त स्वसूत्रग्रन्थमा मत्रै हैन, शतपथश्रुतिमा पनि तेस्तो आरोप लगाउनु भएको छ (मर्यादा, पृ.४१-४२, मूल र टिप्पणी-१ क१-ख५)। यो कस्तो आस्तिक विद्वान् व्यक्तिको काम हो एसमा पाठकहरुले पनि ध्यान दिनुहुने नै छ।

## प्रेतोदकदानादिमन्त्रका "असौ" पदले सङ्केतित गरिएका पदहरुको विचार

### (क) प्रेतकृत्यमा सम्बन्धिवाचकशब्दको प्रयोगको विचार–

अब याँहाँ स्वसूत्रविहित-प्रेतोदकदानमन्त्रादिका "असौ"-पदले सङ्केत गरिएका सम्बोधनपदहरु केके हुन सक्छन् भन्ने विषयमा पनि राम्ररि विचार गर्नु आवश्यक हुन आएको छ। *वैदिक-मन्त्र-सङ्ग्रहमा (पृ.५६) दिइएका* ***"अस्म्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत एतत् त उदकम्"*** *भन्ने प्रेतोदकदानमन्त्रवाक्यमा सम्बन्धवाचक* ***"अस्म्त्पितः"*** *भन्ने पद र जाति जनाउने* ***"शर्म्मन्"*** *भन्ने पद राख्न नहुनेमा ति पद राखिएकाले त्यो वाक्य शास्त्रविरुद्ध हुनाले अशुद्ध भयो* भन्ने डा.महाशयको भनाइ रछ (मर्यादा, पृ.४२-४३)। सम्बन्धिवाचक "पितः" "पितुः" इ पदको त डाक्टरमहाशयले *उत्तम उपाधिले विभूषित, विचारशील, दोषज्ञ, गहनतम महत्त्वपूर्ण उत्कृष्ट एवम् प्रामाणिक ग्रन्थ बनाउने, विशिष्ट, शास्त्रमर्मज्ञ, विपश्चित्, प्रकाण्ड विद्वान्* मानेका रुद्रधरले पनि श्राद्धविवेकग्रन्थमा प्रेतोदकदानवाक्यमा, प्रेतावनेजनदानवाक्यमा, प्रेतपिण्डदानवाक्यमा र प्रेतश्राद्धका अवनेजनदानादिकृत्यका अनेक वाक्यमा समेत प्रयोग गरेकै छन् (पृ.६५, ६६, ६७, ६८, ७२, ७३, ७४, ७५, ८०, ८१, ८२, ८३, ९३, ९४, ९५, ९६, ९७, ९८, ९९, १००, १०३, १०५ इत्यादि)। तेसमा डा.महाशयको

दृष्टि नपरेको हो कि, बिन्याएर हेरे हुञ्च नि। अगिदेखि नै धर्मशास्त्रविषयका पाठ्यक्रममा रएको तेइ ग्रन्थ पडेर परीक्षा दिएर उत्तीर्ण भै तेइ ग्रन्थ पडाउने शिक्षकवृत्तिमा प्रविष्ट भै तेइ ग्रन्थ पडाएका अनुभवका आधारमा अनेक पदोन्नति समेत पाएका डाक्टरमहाशयमा तेसै ग्रन्थका परिशीलनमा एस्तो कमजोरि भएको देखिनु लज्जास्पद कुरा नै मानिएला। डा.महाशयले *गहनतम, महत्त्वपूर्ण तथा प्रमाणिक ग्रन्थ श्राद्धसङ्ग्रह बनाउने प्रकाण्ड विद्वान् व्यक्ति* भनि मानेका (मर्यादा, पृ.४७) वायुनन्दनले पनि प्रेतोदकदानादि वाक्यहरुमा "पितः" "पितुः" इ सम्बन्धिवाचक पद प्रयोगमा ल्याएकै छन् (माष्टर खेलाडीलाल-सङ्कटाप्रसादका हिन्दिअनुवादसहित-श्राद्धसङ्ग्रहका पृ.१७-१८, २२, २३, २४, २५, २८, २९, ३०, ३१, ३९, ४०, ४१, ५०, ५९, ६०, ६२, ६४, ६५, ७७, ७८, ७९, ९०, ९२, ९५, ९८, ९९, १००, १०१, १०२, १०३, १०४, १०६, १०९, १११, ११४, ११५, ११६, ११७, ११८, ११९, १२०, १२२, १२७, १२८, १२९, १३० इत्यादि)। पुस्तक पल्टाएर हेरेमा सबैलाइ थाहा हुने कुरा छ। मिथिलाका प्राचीन मूर्धन्य धर्मशास्त्रनिबन्धकार मानिने श्रीदत्तोपाध्यायले पनि श्राद्धकल्पग्रन्थमा एकादशाहिकश्राद्धका आसनदानादिवाक्यमा सम्बन्धिवाचक "पितः" "पितुः" इ पदको प्रयोग गरेकै देखिञ्छ *(श्राद्धकल्प, वाराणसेय-संस्कृतविश्वविद्यालय, २०२७; पृ.६२,६४)*। मिथिलाका प्रसिद्ध धर्मशास्त्रनिबन्धकार, श्राद्धचिन्तामणिप्रभृति ग्रन्थ बनाउने विद्वान् अभिनव वाचस्पतिमिश्रले बनाएका र विश्वेश्वरझा-रामचन्द्रझादिद्वारा प्रतिसंस्कृत तथा मिथिलामा वर्तमानकालमा चलनचल्तिमा रहेको वाजसनेयि-श्राद्धपद्धतिका अन्त्येष्टिकृत्यमा पनि प्रेतोदकदानादि सबै प्रेतकृत्यहरुमा "पितः" "पितुः" इ सम्बन्धिवाचक-पदहरुको प्रयोग गरिएकै देखिञ्छ। द्रविडदेशस्थ-मायूरक्षेत्रनिवासि दाक्षिणात्य वैदिक ब्राह्मश्रीक रामनाथ दीक्षितको पुरुषोत्तमभट्टकृत-प्रयोगपारिजातादि प्राचीनपरम्पराऽऽगत ग्रन्थका आधारमा रचिएको भनिएको र १९८३ सन्मा प्रकाशित सामस्मार्तप्रयोगमञ्जरीमा पनि एकादशाहश्राद्धमा ति पदको प्रयोग भएकै देखिञ्छ (पृ.२२९,२३०)। एस स्थितिमा डाक्टरमहाशय वैदिक-मन्त्र-सङ्ग्रहकारमाथि के कारणले खनिनु भएको हो बुज्न सकिँदैन। कि यो डाक्टरमहाशयको कूपमण्डूकताकै करामत हो? डा.महाशयले "अस्मत्पितः" इत्यादिलाइ मात्र स्वसम्बन्ध बुजाउने शब्द मान्नु भएको, "पितः" इत्यादिलाइ स्वसम्बन्ध बुजाउने शब्द नमान्नु भएको हो कि ? एस्तो भ्रान्त धारणा त डा.महाशयले पाल्न नपर्ने हो। "अस्मत्पितः" भन्नु र "पितः" भन्नु अर्थका दृष्टिले उस्तै हो। एसमा प्रमाण चाइँदैन, भाषाका स्वभावबाटै यो कुरा बुजिञ्छ। प्रमाण चाइएमा पाणिनीयव्याकरणभाष्यकार पतञ्जलिमुनिका "तद् यथा सम्बन्धिशब्दाः, मातरि वर्तितव्यं पितरि शुश्रूषितव्यमिति, न चोच्यते स्वस्यां मातरि स्वस्मिन् वा पितरीति, सम्बन्धाच् चैतद् गम्यते" इत्यादि भनाइ (तुल्यास्यप्रयत्नं सवर्णम् सूत्रको भाष्य) प्रमाणका रूपमा प्रस्तुत गर्न पनि सकिञ्छ। कतिपय प्राच्य धर्मशास्त्रनिबन्धकारहरुले "अस्मत्पितः" इत्यादि भन्न नहुने "पितः" इत्यादि नै भन्न पर्ने भन्ने भ्रम पालेको र तेसको वीरमित्रोदयकारले निराकरण गरेको कुरामा (श्राद्धप्रकाश, पृ.२९-३०) पनि डा.महाशयको र अरु विवेकशील पाठकहरुको पनि ध्यान जानु उचित छ।

**(ख) प्रेतकृत्यमा शर्मशब्दको प्रयोगको विचार–**

शर्मशब्दका प्रयोगका विषयमा विचार गर्दा पनि पारस्करगृह्यसूत्रका भाष्यकार हरिहरले "अमुकसगोत्राऽमुक*शर्मन्* प्रेत एतत् ते उदकम्" (पृ.३७३), "अमुकसगोत्राऽमुक*शर्मन्* प्रेत अवनेनिक्ष्व" (पृ.३७५), "अमुकसगोत्राऽमुक*शर्मन्* प्रेत एष ते शिरःपूरकः पिण्डो मया दीयते" (पृ.३७५), "अमुकसगोत्राऽमुक*शर्मन्* प्रेतैष ते तिलतोयाञ्जलिस्ते मया दत्तस्तवोपतिष्ठताम्" (पृ.३७५) भनेर प्रेतकृत्यमा पनि शर्मशब्दको प्रयोग देखाएको पाइञ्छ। तेस्तै कात्यायनश्राद्धकल्पसूत्रभाष्यकार गदाधरले पनि "अमुकसगोत्राऽमुक*शर्मन्* प्रेत एतत् ते उदकम्" (पृ.४८९) भन्ने वचनमा प्रेतकृत्यमा पनि शर्मशब्दको प्रयोग देखाएको देखिञ्छ। निर्णयसिन्धुकार कमलाकरभट्टभन्दा पनि पुराना, बङ्गालका प्रसिद्ध धर्मशास्त्रनिबन्धकार अनिरुद्धले हारलतामा "अमुकगोत्रं प्रेतममुकशर्माणं तर्पयामीति छन्दोगानां प्रयोगः" भन्ने कुरा लेखेर (हारलता, कलकत्ता, १९०८ खीष्टाब्द, पृ.१४६) तथा गोविन्दानन्दले पनि "अमुकगोत्रस्य प्रेतस्याऽमुकशर्मण एतत् प्रथमं पूरकं पिण्डमित्यादिमात्रप्रयोगः" (शुद्धिकौमुदी पृ.१३१), **"ॐ अमुकगोत्र प्रेताऽमुकशर्मन्नेतत् ते दर्भासनं स्वधा"** (श्राद्धक्रियाकौमुदी, एसियाटिक सोसाइटि, १९०४ सन्, पृ.४०१) इत्यादि भनेर प्रेतक्रियामा पनि शर्मशब्दको प्रयोग देखाएका छन् । डा.महाशयले पडे-पडाएका र धर्मशास्त्रका पाठचक्रममा अगिदेखि नै रैआएका श्राद्धविवेक ग्रन्थमा नै पनि (पृ.६१) रुद्रधरले प्रेतश्राद्धादिमा पनि शर्मादिपदको प्रयोग गर्ने विद्वान्हरु भएको कुरा लेखेका छन्। एसबाट पनि प्रेतश्राद्धादिमा पनि शर्मादिशब्दको प्रयोग गर्ने परम्परा रुद्रधरका समयमा मिथिलामा पनि रैआएकै बुजिञ्छ। मिथिलाका महामहोपाध्याय लक्ष्मीपतिले बनाएको, कर्मकाण्डोद्धारि वैयाकरणकेसरि परमेश्वरशर्माले टिप्पणीहरु राखेर संशोधन गरि दर्भङ्गामा प्रकाशित गराएको "श्राद्धरत्नम्" भन्ने ग्रन्थमा "प्रेतश्राद्धे पितृनामोट्टङ्कनं शर्मान्तमेव कार्यम्" (पत्र ६, पूर्वपृष्ठ) भन्ने निर्णय दिइएको र प्रयोगहरुमा पनि सर्वत्र शर्मशब्द कोष्ठभित्र राखेर भनेपनि दिइएकै पाइन्छ। द्रविडदेशस्थ-मायूरक्षेत्रनिवासि दाक्षिणात्य वैदिक ब्राह्मश्रीक रामनाथदीक्षितले पुरुषोत्तमभट्टकृत प्रयोगपारिजात, वामनकारिका, शाटचायनकारिका, स्मार्ततन्त्रसुधानिधि, प्रयोगकुसुमावलि इत्यादि प्राचीन परम्परागत ग्रन्थहरुका आधारमा बनाएको भनिएको र १९८३ सन्मा प्रकाशित गरिएको सामस्मार्तप्रयोगमञ्जरीमा "गोत्रस्य *शर्मणो* मम पितुः प्रेतस्याऽद्य प्रथमेऽहनि लज्जानिर्हरणार्थं प्रेततृप्त्यर्थं नग्नप्रच्छादनश्राद्धमामरूपेणाऽद्य करिष्ये" (पृ.२०५), "अद्य प्रथमेऽहनि गोत्राय *शर्मणे* मम पित्रे प्रेताय प्रातरेतं पिण्डं ददामि" (पृ.२०८) इत्यादि प्रयोग देखाएको पाइञ्छ। एस स्थितिमा डाक्टरमहाशयले बोलेको *"त्यसैले प्रेतश्राद्ध वा प्रेतक्रियाको उदकदानादि कुनै पनि कृत्यको संकल्पवाक्यमा आजसम्म कुनै पनि विद्वान्ले सम्बन्ध बुझाउने* **पित्र्यादि** *र जाति जनाउने शर्मादि शब्दको प्रयोग गरेका छैनन्"* (**मर्यादा**, पृ.४३) भन्ने बोलिको ओजन पाठकहरुले पनि स्पष्ट रूपमा बुज्नुहुने नै छ। डाक्टरमहाशयले अरु लेखमा र आलोच्यमान एसै लेखमा पनि अनेक स्थलमा प्रयोगमा ल्याएका *पित्र्यादि-मात्र्यादि*-शब्दले पनि डाक्टरमहाशयको योग्यता प्रकट गरेकै छन्। तेसमा पनि पाठकहरुले

विवेकदृष्टि पुऱ्याउनु हुने नै छ। छैटो कक्षाको पाठ्यक्रममा पनि निर्धारित एउटा "इको यणचि"-सूत्रको अर्थसम्म पनि हृदयमा राम्ररि नखेलेका व्यक्तिका हृदयमा स्वशाखावेद-मन्त्रसंहिता-ब्राह्मण-श्रौतसूत्र-गृह्यसूत्र-परिशिष्टग्रन्थ-जैमिनीयधर्ममीमांसाशास्त्र-नानास्मृति-पुराणहरुका अर्थहरु कति खेलेका होलान् अरु निष्पक्ष विद्वान्‌हरुले पनि अनुमान गर्नुहुने नै छ। शर्म-वर्म-गुप्त-दास-शब्दहरुलाइ ब्राह्मणादिका नामका अपरित्याज्यै अंश मान्ने भर्तृयज्ञादि पारस्करगृह्यसूत्रभाष्यकारादिका मतमा त सबै धर्मकृत्यमा ब्राह्मणादिका नाममा शर्मादिशब्दको प्रयोग हुने कुरा स्वतः सिद्ध हुन्छ भन्ने कुरामा पनि पाठकहरुले ध्यान दिनुहुने नै छ। "शर्मान्तं ब्राह्मणस्योक्तम्" इत्यादि वचनले पनि शर्मादिशब्दलाइ ब्राह्मणादिका नामकै अंश मानेको कुरा देखिएकै छ। आँफुले वृत्तिका लागि पढ्ने-पडाउने गरेका धर्मशास्त्रविषयका पाठ्यक्रममा अगिदेखि नै रैआएका हरिहरभाष्यका र श्राद्धविवेकका कुरा त डा.महाशयका हृदयमा खेल्दैनन् भने अरु ग्रन्थका कुरा के खेल्लान्।

**(ग) "असौ" पदले सङ्केतित गरेका पदहरुको पूर्वाचार्यहरुले समेत दिएको विवरण–**

अब वैदिक-मन्त्र-सङ्ग्रहमा (पृ.५६, ५७, ५८) प्रेतोदकदान-प्रेतावनेजनदान-प्रेतपिण्डदान-मन्त्रहरुका मूल स्थलहरुका सङ्केतहरुले जनाइएका वचनहरुले *"प्रेतक्रियाको **सङ्कल्पवाक्यमा** स्वसम्बन्ध जनाउने **अस्मत्पितः** र जाति जनाउने **अमुकशर्मा** यी शब्द राख्नुपर्ने कुराको सङ्केतसम्म पनि गरेका छैनन्"* (मर्यादा, पृ.४३) भन्ने डा.महाशयका भनाइको विचार गरिन्छ।

वैदिक-मन्त्र-सङ्ग्रहका उक्त स्थलसङ्केतहरुले जनाएका प्रेतोदकदानादिमन्त्रका मूलरूपहरु इ हुन्–

१) **असावेतत् त उदकम्।**–पारस्करगृह्यसूत्र ३।१०।२१।

२) **असाववनेनिक्ष्व।**–कात्यायनश्रौतसूत्र ४।१।१०।

३) **असाववनेनिक्ष्व।**–मा.वा.शतपथब्राह्मण २।४।२।१६,२३।

४) **असावेतत् ते।**–कात्यायनश्रौतसूत्र ४।१।११।

५) **असावेतत् ते।**–मा.वा.शतपथब्राह्मण २।४।२।१९।

वैदिक-मन्त्र-सङ्ग्रहमा देखाइएका उक्त प्रेतोदकदान-प्रेतावनेजनदान-प्रेतपिण्डदान-मन्त्रहरुमा यथोचित सम्बोधनपदहरु राख्न सङ्केत गर्ने "असौ" पद उक्त मन्त्रहरुका मूल रूपहरुमा सबैमा छ। यो असौपदले पितृनामगोत्रादिग्रहणलाइ सङ्केत गरेको छ भन्ने देवण्णभट्टको *(स्मृतिचन्द्रिका, श्राद्धकाण्ड, पृ.३६८-३७०),* हेमाद्रिको *(च.चि.परिशेषखण्ड, श्राद्धकल्प, पृ.१४३३-१४३६),* मित्रमिश्रको *(श्राद्धप्रकाश, पृ.२५८-२५९)* र अरु धर्मशास्त्रनिबन्धकारहरुको पनि स्पष्ट प्रतिपादन देखिन्छ। पराशरमाधवीयमा पनि "असावित्यमुकगोत्रामुकशर्मन्निति सम्बोध्य एतत् ते इति मन्त्रेण पिण्डदानं कुर्यात्" भन्ने उल्लेख पाइन्छ *(प्रथमभाग, पृ.७५३)*। कर्क-देवयाज्ञिकादिले पनि तेस्तै व्याख्या वा प्रयोगहरु

देखाएका छन्। यो "असौ" पदले कति पदहरुलाइ सङ्केत गरेको मान्ने कति पदलाइ सङ्केत नगरेको मान्ने भन्ने विचार गर्दा माध्यन्दिनीय-वाजसनेयिशाखाका स्मार्त श्राद्धकर्महरुको प्रकृतिश्राद्ध कात्यायनश्राद्धकल्पसूत्रविहित अपरपक्षश्राद्ध भएको र तेसको पनि मूल जरो श्रौत पिण्डपितृयज्ञ भएको हुनाले शतपथब्राह्मणमा विधान गरिएको सम्बद्ध पिण्डदानमन्त्रको "असौ" पदले अपरपक्षश्राद्धमा "अस्मत्पितः अमुकशर्मन् अमुकगोत्र अमुकस्वरूप" इत्यादि प्रकारका पदलाइ सङ्केत गरेको मानेर शिष्टपरम्पराले पार्वणश्राद्धमा तेसैअनुसार पिण्डदानवाक्यको प्रयोग गर्दै आएको देखिञ्छ। प्रेतपिण्डदानका विषयमा स्वचरणगुरुका नामको, स्वचरणसम्बद्ध स्मृति याज्ञवल्क्यस्मृतिमा "पिण्डयज्ञावृता देयं प्रेतायाऽन्नं दिनत्रयम्" (३।१६) भनिएको पाइञ्छ। पिण्डपितृयज्ञमा पिण्डदानमन्त्र उपदिष्ट भैसकेकाले नै पारस्करगृह्यसूत्रमा प्रेतपिण्डदानका प्रसङ्गमा तेसको फेरि उपदेश नगरिएको बुजिञ्छ। पिण्डपितृयज्ञको पिण्डदानमन्त्रको अपवादका रूपमा प्रेतपिण्डदानको आर्को मन्त्र पनि पारस्करगृह्यसूत्रमा उपदिष्ट छैन। एस स्थितिमा पिण्डपितृयज्ञ-अपरपक्षश्राद्ध-एकोद्दिष्टश्राद्धहरुमा प्रयुक्त हुने पिण्डदानमन्त्र नै प्रेतपिण्डदानमा पनि साधारणतया प्रयोज्य हुने कुरा उक्त ग्रन्थहरुको राम्ररि पूर्वापर अनुशीलन गर्दा देखिन आउँछ। तेसमा प्रेतले वस्वादिस्वरूप पितृत्व प्राप्त नगरिसकेको हुने हुनाले वास्वादिस्वरूपवाचक पदका ठाममा अवस्थाअनुसारको प्रेतशब्द राख्ने काम गरेर पिण्डदानका उक्त मूल मन्त्रका "असौ" पदले प्रेतपिण्डदानका सम्बन्धमा "अस्म्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत" एति र एस्ता प्रकारका सम्बोधनपदहरुलाइ सङ्केतित गरेको भन्ने कुरा वैदिक-मन्त्र-सङ्ग्रहकारबाट मानिएको देखिञ्छ। शतपथश्रुतिविहित मूल पिण्डदानमन्त्रका "असौ" पदले अपरपक्षश्राद्धमा जे जस्ता पदहरुलाइ सङ्केत गरेको मानिञ्छ अन्त पनि त्यो "असौ" पदले स्वशाखाग्रन्थमा अपवादवचन नभएमा सामान्यतया तिनै र तेस्तै पदहरुलाइ सङ्केत गरेको मान्नु नै औचित्यपूर्ण कुरा देखिञ्छ। *'स्वशाखाग्रन्थहरुमा पिण्डदानमन्त्रको राम्रो व्यवस्था नै नभएको र तिनले तेस्तो व्यवस्था नै नगर्ने'* भन्ने कुरा मान्ने (मर्यादा, पृ.४२) व्यक्तिले मूल वैदिक ग्रन्थहरुको गौरव र मूल वैदिक परम्पराको मर्म कति बुजेको होला भन्ने कुरा वैदिक परम्परामा गम्भीर आस्था भएका विज्ञ पाठकहरुले पनि अड्कल काट्न सक्नुहुने नै छ।

**(घ) प्रेतकृत्यमा शास्त्रले नामको र गोत्रको मात्र प्रयोग गर्नपर्छ भनेको मान्न सकिञ्छ त?**

अब प्रेतकृत्यका उदकदानादिमन्त्रमा नामको र गोत्रको मात्र प्रयोग गर्नपर्छ भन्ने विषयमा डाक्टरमहाशयले देखाएका *"सकृत् प्रसिञ्चन्त्युदकं नामगोत्रेण वाग्यताः"* (मर्यादा, पृ.४२, टि.४) इत्यादि वचनको विचार गरिञ्छ। त्याँहाँ नामको र गोत्रको मात्र उच्चारण गर्नु भनेको हो भन्नि मान्दा त वाक्य नै नबन्ने भयो। तसर्थ तेसो मान्न मिलेन। सम्बोधनका पदहरुमध्ये नामको र गोत्रको मात्र उच्चारण गर्नु भनेको हो भन्ने पनि मान्न मिलेन। तेसो मान्दा त प्रेतशब्दको उच्चारण पनि गर्न नहुने भन्ने मान्न पर्‍यो। तेसो त कसैले पनि मानेको छैन। डाक्टरमहाशयले उद्धृत गरेका वचनको मात्र भर पर्ने हो भने वाँहाँले उद्धृत गरेका

*"गोत्रनामभिरामन्त्र्य (पितॄनर्घ्यं प्रदापयेत्)"* (मर्यादा, पृ.४५, टि.१० क) भन्ने वचनले त प्रेतश्राद्धमा मात्र हैन पितृश्राद्धमा पनि गोत्रको र नामको मात्र उल्लेख गर्ने कुरा बताएको पनि मान्न पर्ला। तेसो त मानिँदैन। पितृश्राद्धकै प्रसङ्गमा नामगोत्रको मात्र उल्लेख गर्ने वचन पनि घनेरा पाइन्छन्। जस्तै– *"नामगोत्रं* पितॄणां तु प्रापकं हव्यकव्ययोः" (पराशरमाधवीय, प्रथमभाग, पृ.७२६), "या दिव्या आप इति पात्रं पाणिभ्यामुद्धृत्य *नाम गोत्रं* च गृहीत्वा सपवित्रहस्तेऽर्घ्यं दद्यात्" (पूर्ववत्, पृ.७३६), "पितॄणां *नामगोत्रेण* जलं देयमनन्तरम्" (पूर्ववत्, पृ.७५७), "स्वस्तिवाचनकं कुर्यादक्षय्योदकमेव च। सतिलं *नामगोत्रेण* दद्याच्छक्त्या च दक्षिणाम्" (पूर्ववत्), "तथा पुष्पाक्षतान् पश्चादक्षय्योदकमेव च। सतिलं *नामगोत्रेण* दद्याच् छक्त्या च दक्षिणाम्" (पद्मपुराण, सृष्टिखण्ड १०।१७३), "कृत्वा तु दक्षिणाग्रांश्च कुशांश्च प्रयतः शुचिः। प्रददौ श्रीमते पिण्डं *नामगोत्र*मुदाहरन्" (वराहपुराण १८७।३९-४०) इत्यादि। तसर्थ वाँहाँले उद्धृत गरेका प्रकारका वचनबाट वैदिकहरुका स्वशाखासूत्रोक्त प्रेतकृत्यादि धर्मकृत्य मूल रूपमा नियन्त्रित हुँदैनन्; तेस्ता अरु ग्रन्थका वचनबाट त वैदिकहरुका लागि स्व-स्ववेदशाखाग्रन्थका कुराहरुको सामान्य सङ्केत स्पष्टीकरण र व्याख्यानहरु मात्र हुने हुन् र वैदिकहरुका प्रमुख धर्मकृत्यहरु त मूल रूपमा स्व-स्वशाखाग्रन्थहरुबाटै प्रतिपादित र नियन्त्रित हुन्छन् भन्ने कुरा मूल वैदिक मार्गका अनुयायिहरु सबैले राम्ररि बुज्नु आवश्यक छ।

## प्रेतक्रियामा स्वसम्बन्धवाचक-शब्दको र शर्मादिशब्दको निषेधको विचार

**डा.महाशयले** *"यी वचनहरूले प्रेतक्रियाको सङ्कल्पवाक्यमा प्रेत हुने मानिसको गोत्र र नाम मात्र उच्चारण गर्नुपर्छ भनी स्पष्ट भनेका छन्। यी वचनमा पनि टि.नं.२को वचन विशेष, अनुल्लङ्घनीय र सतत आदरार्ह मानिन्छ। त्यसले सम्बन्ध जनाउने र जातिजनाउने शब्दको प्रयोग गर्न पूर्ण निषेध गरेको छ"* (मर्यादा, पृ.४२) भन्नुभएको रच। वाँहाँले अनुल्लङ्घनीय र सतत आदरार्ह भनेको वचन यो हो–

आशिषो द्विगुणा दर्भा जपाशीः स्वस्तिवाचनम्।
पितृशब्दः स्वसम्बन्धः शर्मशब्दस् तथैव च॥
पात्रालम्भो वगाहश्च उल्मुकोल्लेखनादिकम्।
तृप्तिप्रश्नश्च विकिरः शेषप्रश्नस्तथैव च॥
प्रदक्षिणा विसर्गश्च सीमान्तगमनं तथा।
अष्टादश पदार्थांश्च प्रेतश्राद्धे विवर्जयेत्॥

डा.महाशयले अनुल्लङ्घनीय र सतत आदरार्ह मानेका उक्त वचनलाइ **डाक्टरमहाशयले** *उच्चतम उपाधिले विभूषित, विचारशील, दोषज्ञ, गहनतम-महत्त्वपूर्ण-प्रामाणिक-ग्रन्थ बनाउने, विचक्षण, प्रकाण्ड विद्वान्* मानेका रुद्रधरले नै डाक्टरमहाशयले परीक्षामा उत्तीर्ण हुन पडेका पाठचक्रममा राखेका र वेतनका लागि र पदोन्नति प्राप्त गर्नका

लागि पडाएका, धर्मशास्त्र विषयका पाठ्यक्रममा अगिदेखि नै रैआएका श्राद्धविवेकग्रन्थद्वारा नै उल्लङ्घन र अनादर गरेका कुरामा डा.महाशयको दृष्टि नपुग्नु लाजमोर्दो कुरा देखिन आएको छ। उक्त कुरामा डा.महाशयको स्वतः दृष्टि पुग्न पर्नेमा वैदिक-मन्त्र-सङ्ग्रहका टिप्पणीमा (पृ.५९, टि.३) एस विषयमा ध्यान आकृष्ट गरिसकिएका कुरामा पनि वाँहाँको ध्यान नजानु त अझै बर्ता लाजमोर्दो कुरा छ।

रुद्रधरका श्राद्धविवेकका द्वितीयपरिच्छेदमा आएको, ब्राह्मणादिका चतुर्थादि दिनमा हुने भनिएको अस्थिसञ्चयनश्राद्धको र तृतीय परिच्छेदमा आएको एकादशाहश्राद्धको प्रतिपादन हेर्नुहोस् त धर्मशास्त्राचार्य प्राध्यापक डाक्टर महाशय। तेसमा अस्थिसञ्चयनश्राद्धमा उक्तवचनले निषेध गरेका द्विगुणदर्भप्रयोग (पृ.७२-७५), पात्रालम्भ (पृ.७३), (अ)वगाह (पृ.७३), रक्षोघ्नमन्त्रादिजप (पृ.७३), विकिर (पृ.७४, ७५), उल्मुकोल्लेखनादि (पृ.७४) र आशीःप्रार्थनादि (पृ.७५) इ पदार्थ प्रतिपादित छन् कि छैनन् अलिकति ध्यान दिएर हेर्नुहोस् न। अनि रुद्रधरभन्दा पनि पुराना ग्रन्थकार चण्डेश्वरपितृव्य गणेश्वरले बनाएको सुगतिसोपान भन्ने ग्रन्थअनुसार देखाइएका रुद्रधरकृत एकादशाहश्राद्धप्रयोगमा उक्त वचनले निषेध गरेका द्विगुणदर्भ (पृ.९४-१०५), जप (पृ.१०१), आशीःप्रार्थनादि (पृ.१०४-१०५), स्वस्तिवाचन (पृ.१०६), पितृशब्द-स्वसम्बन्ध (पृ.८०, ८१, ८२, ८३, ९३, ९६, ९७, ९८, ९९, १००, १०३, १०५, १०६), पात्रालम्भ (पृ.१००), (अ)वगाह (पृ.१००), उल्मुकोल्लेखनादि (१०२), तृप्तिप्रश्न (पृ.१०२), विकिर (पृ.१०४), प्रदक्षिणा (पृ.१०६) इ पदार्थको प्रयोग देखाइएको छ कि छैन एक पल्ट अल्लि ध्यान दिएर हेर्नुहोस् न। आँफ्नो ग्रन्थाध्ययनयोग्यता-विशेषलाइ एस प्रकारले जनसमक्ष उदाङ्ग पारेर प्रस्तुत गर्नुहुने डाक्टरमहाशयले कसरि पाठ्यक्रमका ग्रन्थ पड्नुभयो होला, कसरि परीक्षा उत्तीर्ण गर्नुभयो होला, कसरि अध्यापनकार्यमा प्रवेश पाउनुभयो होला, कसरि डाक्टर उपाधि प्राप्त गर्नुभयो होला, कसरि पदोन्नतिहरु पाउनुभयो होला भनेर आश्चर्य मान्नपर्ने स्थिति पो उक्त लेखद्वारा डाक्टरमहाशयले खडा गरिदिनुभएको छ त। डाक्टरमहाशयका उक्त लेखले वाँहाँको व्यक्तिगत रूपमा मात्र हैन संस्कृत-विश्वविद्यालयको संस्थागत रूपमा पनि बेइज्जति गराएको छ। संस्कृत-विश्वविद्यालयका डाक्टर र प्राध्यापक त एस्ता गतिका माञ्छे हुञ्छन् भने अरुको के गति होला भनेर विवेकशील व्यक्तिहरुले संस्कृत-विश्वविद्यालयको नै अवमूल्यन गर्ने स्थिति डाक्टरमहाशयले ल्याइदिनुभएको देखिञ्छ।

डा.महाशयले वृत्तिका निम्ति नै पनि पड्ने-पडाउने गर्नै पर्ने पाठ्यक्रमका ग्रन्थमा त वाँहाँको उक्त प्रकारको गति छ भने पाठ्यक्रममा नभएका वृत्तिका लागि पड्न-पडाउन नपर्ने गदाधरभाष्य-विश्वनाथभाष्यादिमा वाँहाँको के गति होला र। वाँहाँले पारस्करगृह्यसूत्रका भाष्यकार विश्वनाथको नाम सम्म पनि राम्ररि पक्रन सक्नुभएको देखिँदैन। वाँहाँले विश्वनाथलाइ विश्वराम भन्नु भएको छ (उक्त लेख, पृ.४४, मूल र टिप्पणी ७ ख ग)। तथापि विश्वनाथभाष्यमा पनि एकादशाहका पिण्डदानप्रकरणमा रेषा(रेखा)को

उल्लेख (पृ.३८३) देखिएकाले त्याँहाँ प्रेतश्राद्धमा उल्मुकोल्लेखनादिलाइ अवर्ज्य मानिएको छनक पाइञ्छ भन्ने कुरामा विचार गर्न पनि डा.महाशयको ध्यान आकृष्ट गरिञ्छ।

रुद्रधरभन्दा पनि धेरै अगिका, विक्रमाब्दका तेरौँ शताब्दीतिरका बङ्गालका प्रसिद्ध धर्मशास्त्रनिबन्धकार अनिरुद्धले पनि पितृदयितामा प्रेतश्राद्धमा पनि स्वधा, तृप्तिप्रश्न, उल्मुकोल्लेखनादि, आशीःप्रार्थना, विसर्ग, प्रदक्षिणा इत्यादिको प्रयोग देखाएकै छन् (पृ.४१-४५) । मिथिलाप्रदेशका प्राचीन मूर्धन्य धर्मशास्त्रि मानिएका श्रीदत्तोपाध्यायले पनि माथि उल्लेख गरिसकिएका श्राद्धकल्पग्रन्थमा एकादशाहका एकोद्दिष्टश्राद्धमा "पितः" "पितुः" इ सम्बन्धिवाचक शब्द, जप (पृ.६३), विकर (पृ.६३), तृप्तिप्रश्न (पृ.६३), शेषप्रश्न (पृ.६३), आशीःप्रार्थनादि (पृ.६४,६५), स्वस्तिवाचन (पृ.६५), विसर्ग (पृ.६५), सीमान्तानुव्रजन (पृ.६५), प्रदक्षिणा (पृ.६५) इ पदार्थहरुको प्रयोग देखाइ अष्टादश पदार्थको प्रेतश्राद्धमा वर्जन गर्नपर्छ भन्ने उक्त वचन प्रति अनादर देखाएका छन्।

श्राद्धचिन्तामणिकार वाचस्पति मिश्रले बनाएका र प्रतिसंस्कृत रूपमा वर्तमानकालमा पनि मिथिलामा चलनचल्तिमा रहेका वाजसनेयि-श्राद्धपद्धतिका एकादशाहश्राद्धपद्धतिमा पनि उक्त वचनलाइ वास्ता नगरि "पितः" "पितुः" इ पदको प्रयोग, द्विगुणदर्भ(मोटक)को प्रयोग, पात्रालम्भ, अङ्गुष्ठावगाहन, जप, विकर, रेखाकरणादि, आशीःप्रार्थनादि पदार्थको प्रयोग देखाइएको पाइञ्छ। त्याँहाँ "आशिषो द्विगुणा दर्भाः" इत्यादि निषेध एकादशाहमा लाग्छ भन्नु भ्रम हो भन्ने कुरा पनि गरिएको देखिञ्छ (वाजसनेयिनां श्राद्धपद्धतिः, सम्पादक– रामचन्द्र झा, चौखम्बा विद्याभवन, १९९३ सन्)।

द्रविडदेशस्थ-मायूरक्षेत्र-निवासि, दाक्षिणात्य वैदिक ब्राह्मश्रीक रामनाथ दीक्षितले पुरुषोत्तमभट्टकृत-प्रयोगपारिजातादि प्राचीन परम्परागत ग्रन्थहरुका आधारमा बनाएको भनिएको र १९८३ सन्मा प्रकाशित गरेको सामस्मार्तप्रयोगमञ्जरीमा पनि उनले उक्त वचनको वास्तै नगरि तेसमा निषिद्ध अष्टादश पदार्थमध्ये शर्मशब्द (पृ.२२८), स्व-सम्बन्धिशब्द (पृ.२२८,२२९,२३०), [आवाहन (पृ.२२९,२३०)], अन्नाभिमर्शन [पात्रालम्भ] (पृ.२२९), विकर (पृ.२३०), जप (पृ.२३०), विसर्ग (पृ.२३१), प्रदक्षिणा (पृ.२३१) इ पदार्थको प्रयोग एकादशाहको आद्यमासिक-महैकोद्दिष्टश्राद्धमा पनि देखाएकै छन्।

एस स्थितिमा उक्त १८ पदार्थको वर्जन गर्न पर्नेनपर्ने विषयमा जिज्ञासुहरुलाइ कुरा अज्झै स्पष्ट गरिञ्छ। आफ्ना शाखामा विहित कर्महरुका आफ्ना शाखाका ग्रन्थहरुबाट र मूल परम्पराबाट प्राप्त तथा आफ्ना शाखाका ग्रन्थमा अनिषिद्ध पदार्थहरुलाइ ति पदार्थ लघुस्मृति-पुराणादिका वचनबाट निषिद्धै भएपनि अतिलोकविक्रुष्ट नभएमा तिनै लघुस्मृति-पुराणका वचनका आधारमा मात्र नछोड्ने नै वैदिकहरुको मूल परम्परा रैआएको देखिञ्छ। एस कुरालाइ स्पष्ट पार्न तल केइ कुरा प्रस्तुत गरिञ्छ–

**नान्दीमुखश्राद्धका विषयमा पुराणसमुच्चयको वचन एस्तो देखिञ्छ–**

**न स्वधा शर्मवर्मेति पितृनाम न चोच्चरेत्।**
**न कर्म पितृतीर्थेन न कुशा द्विगुणीकृताः॥**
**न तिलैर् नाऽपसव्येन पित्र्यमन्त्रविवर्जितम्।**
**अस्मच्छब्दं न कुर्वीत श्राद्धे नान्दीमुखे क्वचित्॥**

**–नित्यानन्दकृत संस्कारदीपक, प्रथमभाग, पृ.६१।**

**एस वचनमा टिप्पणी गर्दै नित्यानन्द पर्वतीयले** *'याँहाँ पितृनामको उच्चारण नगर्नु, अस्मत्-शब्दको प्रयोग नगर्नु भन्ने कुरा अरु शाखाका लागि हुन्, आफ्ना शाखामा (माध्यन्दिनीय-वाजसनेयिशाखामा) "**न स्वधां प्रयुञ्जीत**" भनेर स्वधाशब्दको मात्र निषेध गरिएको देखिएकाले ति कुरा माध्यन्दिनीय-वाजसनेयिहरुमा लाग्दैनन्, गोत्रादिनिषेधहरु अन्यशाखीयहरुका लागि भएकाले सम्बन्धनिषेध पनि तिनैका लागि हो, तेसैले कात्यायनमतानुसारिहरुका नान्दीश्राद्धमा सम्बन्धादिकथन अवश्य हुञ्छ भनि गदाधरादिले भनेका छन्, तेसै भएर मदनरत्नका दानखण्डमा र टोडरमिश्रपद्धतिमा पनि आभ्युदयिकश्राद्धमा सबै ठाममा गोत्र-शर्मशब्दहरुको उच्चारण देखाइएको छ'* **भन्ने कुरा लेखेका छन् (संस्कारदीपक, प्रथमभाग, पृ.६१)।**

**फेरि वृद्धिश्राद्धमा गरिने सङ्कल्पका विषयमा पनि प्रथमान्तले नै सङ्कल्प गर्नु षष्ठीले वा चतुर्थीले वा सम्बुद्धिले नगर्नु भन्ने वचन पनि पाइञ्छ। जस्तै–**

**शुभाय प्रथमान्तेन वृद्धौ सङ्कल्पमाचरेत्।**
**न षष्ठ्या न चतुर्थ्या वा सम्बुद्ध्या वा कदाचन॥**

**–नित्यानन्दकृत संस्कारदीपक, प्रथमभाग, पृ.६२।**

**एस वचनमा पनि टिप्पणी गर्दै नित्यानन्दले** *'गोत्रादिनिषेधजस्तै तेसैसित भएको सङ्कल्पवाक्यमा प्रथमान्तको प्रयोग गर्नु भन्ने नियम पनि कात्यायन-श्राद्धकल्पसूत्रका अनुयायिहरुका लागि आदरयोग्य हैन'* **भनेका छन् (संस्कारदीपक, प्रथमभाग पृ.१२४)।**

**स्वसूत्रका विधानहरुलाइ उपलक्षण भन्दै स्वसूत्रलाइ अव्यवस्थापकतामा र अपरिच्छेदकतामा पुऱ्याउने अरु व्याख्याभन्दा उपर्युक्त व्याख्या नै मूल वैदिक अध्ययनादिव्यवस्थाको विशेष अनुकूल भएकाले त्यो नै युक्तियुक्त देखिञ्छ। तसर्थ उपर्युक्त विवरणबाट लघुस्मृति-पुराणादिका वचनहरु आँफ्ना शाखाका ग्रन्थले गरेका विधानका अनुकूल भएमा मात्र आदरणीय हुञ्छन्, अन्यथा आदरणीय हुँदैनन् भन्ने कुरा कात्यायनमतानुयायि, रुद्रधरभन्दा पनि पुराना, मदनरत्नकारादि प्राचीन विद्वान्हरुका पालादेखि नै मानिँदै आएको कुरा अज्झै राम्ररि स्पष्ट हुञ्छ।**

**उक्त प्रकारको मूल परम्परा भएकाले नै त्यो परम्परा राम्ररि बुजेका श्रीदत्तोपाध्याय-सुगतिसोपानकारगणेश्वर-रुद्रधरादि प्राचीन विद्वान्हरुले आँफ्ना-आँफ्ना**

शाखाका ग्रन्थको अनुकूल नहुनाले, प्रेतश्राद्धमा अष्टादश पदार्थको वर्जन गर्नपर्छ भन्ने लघुस्मृति-पुराणादिका वचन हेमाद्रिहरुले लेखेकै भएपनि तेसको अनादर गर्दै आएको देखिञ्छ। उपलभ्यमान प्राचीनतम महान् धर्मशास्त्रनिबन्ध कृत्यकल्पतरुका रचयिता लक्ष्मीधरले भने आश्वलायनीयहरुका एकोद्दिष्टश्राद्धमा निषिद्ध धेरै नै पदार्थहरुको पनि विवरण दिएका भए पनि उक्त "आशिषो द्विगुणा दर्भाः" इत्यादि वचन भने लेखेका छैनन्। शुद्धिमयूखकारले पनि कृत्यकल्पतरुकै अनुसरण गरेका छन्, "आशिषः" इत्यादि वचनलाइ वास्तागरेका छैनन्। मूल गरुडपुराणका प्रेतखण्डका पैँतिसौँ अध्यायमा आएका प्रेतश्राद्धमा वर्जन गर्नपर्ने भनिएका अष्टादश पदार्थहरुका सूचीमा र प्रस्तुत वचनका सूचीमा धेरै नै अन्तर देखिञ्छ। एस्ता अनिर्ज्ञातमूल अव्यवस्थित वचनहरुबाट वेदशाखाविशेषाध्यायिहरुका कृत्यहरु नियन्त्रित हुँदैनन् भन्ने कुरा वेदमार्गानुयायिहरुले राम्ररि बुज्नु आवश्यक छ।

डा.महाशयले वृत्तिका निम्ति समेत पडे-पडाएकै ग्रन्थ निर्णयसिन्धुमा पनि "यत् तु बृहन्नारदीये अनग्निर् दूरभार्यश्च...इति तद् वृद्धानादरादुपेक्ष्यम्" (पृ.३१३) भनि बृहन्नारदीयपुराणका वचनलाइ उपेक्षणीय मानिएको कुरा पनि आएकाले पनि वाँहाँले लघुस्मृति-पुराणका सबै वचन सबैका लागि आदरणीय हुँदा रइञ्चन् भन्ने कुरा पनि बुज्न सक्ने पर्नि देखिञ्च।

एस स्थितिमा माध्यन्दिनीय-वाजसनेयिशाखाका मूल ग्रन्थहरुमा अन्त एकादशाहका एकोद्दिष्ट श्राद्धको पद्धति नबताइएकाले, कात्यायन-श्राद्धकल्पसूत्रको चौथो कण्डिका प्रेतैकोद्दिष्टश्राद्ध-पित्रेकोद्दिष्टश्राद्ध-साधारण भएकाले, त्यो चौथो कण्डिका प्रेतैकोद्दिष्ट-पित्रेकोद्दिष्टसाधारण भएको कुरा सबै धर्मशास्त्रनिबन्धकारहरुले मानेकाले, गदाधरले पनि पद्धति लेख्ता धेरै कुरामा अरुका बहकाइमा परेकै भएपनि तेइ कुरा मानेर एस कण्डिकाका व्याख्यामा क्रियापद्धति समेत देखाएकाले र तेस कण्डिकामा उक्त वचनका अष्टादश पदार्थहरुमध्ये कुनै पनि पदार्थ सोजै निषिद्ध नभएकाले कात्यायनमतानुयायि माध्यन्दिनीय-वाजसनेयिहरुका प्रेतैकोद्दिष्टश्राद्धमा स्वसूत्रबाट नै अप्राप्त वा अर्थान्निषिद्ध पदार्थहरुबाहेक ति अष्टादश पदार्थमा पर्ने अरु कुनै पनि पदार्थ निषिद्ध मानिँदैनन् भन्ने सिद्धान्त आस्तिक वैदिक विद्वान्हरुले राम्ररि हृदयमा चडाउन पर्ने देखिञ्छ। गदाधरादि कतिपय अर्वाचीन पद्धतिकारहरु अन्यशाखाका पद्धतिकारहरुका बहकाइमा परेर प्रेतश्राद्धमा उक्त अष्टादश पदार्थको वर्जन गर्नतिर लागेका देखिञ्छन्। तिनको त्यो व्यवहार मूल वैदिक सिद्धान्तको र परम्पराको प्रतिकूल हुनाले अनुकरणीय मानिन नसक्ने देखिञ्छ। तेसै कारणले अगिदेखि आजसम्मका मिथिलाका वाजसनेयिहरुका प्रेतश्राद्धमा गदाधरादिका पद्धतिको अनुकरण नगरिएको देखिञ्छ।

एस विषयमा सिद्धान्तको प्रतिपादन गर्दा उक्त सिद्धान्तको राम्रै प्रतिपादन गरेपनि सम्बद्ध पद्धति लेख्ता उक्त सिद्धान्त बिर्सेर कलम चलाउनु नित्यानन्दादि कतिपय अर्वाचीन विद्वान्हरुको पनि भुलै देखिञ्छ।

पारस्करगृह्यसूत्रमा "ग्रामवचनञ् च कुर्य्युः, विवाहश्मशानयोर् ग्ग्रामम् प्रविशतादिति वचनात्, तस्म्मात् तयोर् ग्ग्रामः प्रमाणमिति श्श्रुतेः" (पा.गृ.१।८।११-१३) भन्ने कुरा आएकाले प्रेतकृत्यमा चलनचल्ति नै प्रमाण हुञ्च भन्ने कुरा पनि कोइ निकाल्चन्। डा.महाशयले यो कुरा नउठाएको भएपनि अरुका मनमा यो शङ्का उठ्न सक्ला। तसर्थ एस विषयमा पनि स्पष्टीकरण गरिञ्छ। "ग्रामवचनञ् च कुर्य्युः" भनेर आँफ्ना कुलका बुडि आइमाइहरुले अगिदेखि गरिआएको भनेर जेजे भञ्छन् त्यो पनि गर्नु भनिएको हो। यो कुरा प्रकरणबाट विशेष गरेर विवाहका विषयमा नै भनिएको देखिञ्छ। तथापि प्रमाणवचनमा श्मशानको पनि उल्लेख भएकाले प्रेतकृत्यका विषयमा पनि भनिएको मान्न सकिञ्छ। किन्तु एस वचनमा स्वसूत्रको विधान छोडेर वा तेसमा उलटफेर गरेर वा खलबल पारेर कर्म गर्न हुञ्छ भनिएको हैन, स्वसूत्रोक्त कर्म स्वसूत्रअनुसार गरि स्वसूत्रोक्त कर्ममा बाधा-विरोध-व्यवधानहरु नपारि विवाहमा र श्मशानकृत्यमा बुडि-रुडिका कुरा पनि गर्नपर्छ भन्ने कुरा मात्र एस वचनमा गरिएको हो भनि राम्ररि बुज्नपर्छ। यो कुरा उक्त सूत्रका प्रकरणले र च-शब्दले राम्ररि नै बुजाएको छ। तेसमा पनि स्वसूत्रोक्त कुराभन्दा बडि कुराहरु जनबल-धनबल-शरीरबलहरु भएका पुगिसरिआएका सम्पन्न माञ्छेका लागि हुन्, साधारण माञ्छेका लागि स्वसूत्रोक्त कर्म मात्र नै पर्याप्त हुञ्छन् भन्ने कुरा परिशिष्ट-लघुस्मृति-पुराणादिवचनहरुबाट बुजिञ्छ।

## अवनेजन-प्रत्यवनेजन-दान-मन्त्र-विचार

अब अवनेजनदान-प्रत्यवनेजनदान-मन्त्रका विषयमा विचार गरिञ्छ। पारस्करगृह्यसूत्रमा अवनेजनदान-प्रत्यवनेजनको विधान "अवनेजनदान-प्प्रत्त्यवनेजनेषु नामग्ग्राहम्" (३।१०।२७) भनेर गरिएको छ। अवनेजन-प्रत्यवनेजनको मन्त्र पिण्डपितृयज्ञको नै प्रयुक्त हुने हुनाले पारस्करले छुट्टै मन्त्रको उपदेश गरेका छैनन्। उक्त अवनेजनदान-प्रत्यवनेजनदान-विधानको लगत्तै पछिका सूत्रमा क्षीरोदकनिधानमा प्रेतका नामादिको उच्चारण नगर्ने "प्रेत" मात्र भनेर सम्बोधन गर्ने कुराको विधान गरिएकाले अवनेजनदान-प्रत्यवनेजनदानमा पनि प्रेतका नामादिको उच्चारण नगर्ने हो कि भन्ने शङ्का पर्ला भनेर अवनेजनदान-प्रत्यवनेजनदानमा प्रेतका नामादिको उच्चारण गर्नपर्छ है भन्ने जनाउन "नामग्ग्राहम्" भनिएको देखिञ्छ। एसबाट पिण्डपितृयज्ञकै अवनेजनदान-प्रत्यवनेजनदान-मन्त्र प्रेतपिण्डदानका अवनेजनदान-प्रत्यवनेजनदानमा पनि प्रयुक्त हुने कुरा स्पष्ट हुञ्छ। यो कुरा अतिविशिष्ट-योग्यता-सम्पन्न प्राध्यापक डाक्टरमहाशयले मात्र बुज्न नसक्नुभएको हो, भाष्य-पद्धतिकार हरिहरादिले त बुजेकै देखिञ्छ। तेसैले हरिहरले "अमुकसगोत्राऽमुकशर्मन् प्रेत अवनेनिक्ष्व" भन्ने नै अवनेजनदानमन्त्र देखाएका छन् (पृ.३७५)। भाष्यकार विश्वनाथले पनि "अमुकसगोत्रा-ऽमुकप्रेताऽवनेनिक्ष्व" भन्ने नै मन्त्र देखाएका छन् (पृ.३८१)। तेसै गरि गदाधरले पनि कात्यायन-श्राद्ध-कल्पसूत्रभाष्यमा "अमुकसगोत्राऽमुकप्रेताऽवनेनिक्ष्व" भन्ने नै मन्त्र

देखाएका छन् (पृ.४८९)। श्राद्धका प्रसङ्गमा हेमाद्रिले पनि "कात्यायनादिमतेनाऽवनेजन-प्रयोगवाक्यम् अमुकगोत्राऽस्मत्पितर् देवदत्तशर्मन्नवनेनिक्ष्व इत्यादि" (पृ.१४२५) भनेका छन्, नीलकण्ठभट्टले श्राद्धमयूखमा पनि "पितरमुकशर्मन्नमुकगोत्र वसुस्वरूप सपत्नीकाऽवनेनिक्ष्व" भन्ने नै अवनेजनदानमन्त्र देखाएका छन् (पृ.११०); वीरमित्रोदयका श्राद्धप्रकाशमा मित्रमिश्रले पनि "अत्र कात्यायनमते अमुकगोत्र अस्मत्पितः अमुकशर्मन्नवनेनिक्ष्वेति प्रयोगवाक्यं द्रष्टव्यम्" भनेका छन् (पृ.२५४)। प्रेतपिण्डदानमा र पिण्डपितृयज्ञमा अवनेजनदान-पिण्डदानवाक्यहरु उस्तै प्रकारका हुने कुरा मिताक्षराकार विज्ञानेश्वरले पनि आफ्ना उपजीव्य मानेका विश्वरूपाचार्यले *"पितृयज्ञावृता देयं प्रेतायान्नं दिनत्रयम्"* भन्ने याज्ञवल्क्यस्मृति-वचनका व्याख्यामा "पितृयज्ञोक्तावनेजनादीतिकर्तव्यतया श्राद्धमकृत्वैव प्रेतायान्नं देयम्" भनेर स्पष्ट पनि गरेकै छन्। अपरपक्षश्राद्ध-एकोद्दिष्टश्राद्धहरुका र पिण्डपितृयज्ञका अवनेजनदान-पिण्डदानमन्त्रहरु उस्तै प्रकारका हुने कुरा विद्वान्‌हरुलाइ विदितै छ। एस स्थितिमा डाक्टरमहाशयको *"'**अवनेजनं र उपतिष्ठताम्**' यी शब्दको प्रयोग बिना निर्मित सङ्कल्पवाक्य **पूर्ण, शुद्ध र अदृष्टोत्पादक** बन्न सक्दैनन्"* भन्ने समेतको र *"अवनेजन र प्रत्यवनेजन दिंदा **अवनेजनं वा प्रत्यवनेजनं ते मया दीयते तवोपतिष्ठताम्**, यही वाक्य उच्चारण गर्नु **अनिवार्य** छ र हाम्रो चलन पनि प्राचीनकालदेखि यस्तै रही आएको छ"* भन्ने भनाइ (मर्यादा, पृ.४४) अयथार्थ नै देखिन्छ। तेसमा पनि हरिहर गदाधर विश्वराम (विश्वनाथ?) समेतले डा.महाशयले भनेजस्तो कुरा मानेको भन्ने डा.महाशयको कुरा (मर्यादा, पृ.४४) त हरिहरादिका सुलभ मुद्रित प्रकाशित ग्रन्थका तत्तत् स्थलहरु पल्टाएर हेरेपछि कसले पत्याउला र! मिथिलाप्रदेशका विख्यात धर्मशास्त्रि मानिएका श्राद्धचिन्तामणिकार अभिनव-वाचस्पतिमिश्रका वर्तमान कालमा पनि मिथिलाका वाजसनेयिहरुका प्रचलनमा रहेका श्राद्धपद्धतिका दशगात्रविधिमा पनि अवनेजनदानवाक्यमा अवनेजनं वा प्रत्यवनेजनं भन्ने पदको प्रयोग देखिँदैन। *'अवनेजनं वा प्रत्यवनेजनं ते मया दीयते तवोपतिष्ठताम् यही वाक्य उच्चारण गर्नु अनिवार्य छ'* भन्ने डा.महाशयको कुरा (मर्यादा, पृ.४४) त डाक्टरमहाशयले नै *गहनतम महत्त्वपूर्ण प्रामाणिक ग्रन्थ बनाउने* भनेर मानेका रुद्रधरका श्राद्धविवेकबाट पनि समर्थित हुँदैन भन्ने सम्म कुरा पनि वाँहाँले बुज्नसक्नुभएको देखिएन। रुद्रधरले श्राद्धविवेकमा प्रेतपिण्डदानादिसम्बन्धि अवनेजनदानवाक्यमा र प्रत्यवनेजनदानवाक्यमा 'अवनेजनं' वा 'प्रत्यवनेजनं' भन्ने पदको प्रयोग नगरेर सर्वत्र 'अवनेनिक्ष्व' वा 'प्रत्यवनेनिक्ष्व' भन्ने पदको नै प्रयोग गरेका छन्। यो कुरा इँहिँ तल दिइएका विवरणबाट र उनका ग्रन्थका तल सङ्केतित स्थलहरुको अवलोकनबाट पनि स्पष्ट रूपमा बुज्न सकिन्छ। आँफुले वृत्तिका लागि नपडे-नपडाएका ग्रन्थहरुको परिशीलनमा मात्र हैन, वृत्तिका लागि पडे-पडाएका धर्मशास्त्र विषयका पाठचक्रममा अगिदेखि नै रैआएका हरिहरभाष्य-श्राद्धविवेकादि ग्रन्थहरुको विवेचनात्मक परिशीलनमा पनि धर्मशास्त्राचार्य प्राध्यापक डाक्टर-महाशयको आसर्जेलाग्दो दुर्बलता पदेपदे देखिन आएको छ।

वैदिक-मन्त्र-सङ्ग्रहकारले आँफ्ना शाखाका श्रुति-सूत्रादि ग्रन्थका अनुकूल कुरा सबैका लिने, तिनका प्रतिकूल कुरा सबैका छोड्ने गरेर विवेकको प्रयोग गरेको पाइञ्छ। उक्त धर्मशास्त्राचार्य प्राध्यापक डाक्टरमहाशयले त रुद्रधरका श्राद्धविवेकका "अद्याऽमुकगोत्र पितरमुकप्रेत शिरःपूरक-प्रथमपिण्डस्थानेऽत्राऽवनेनिक्ष्व ते मया दीयते तवोपतिष्ठताम्" (पृ.६६), "अद्याऽमुकगोत्र पितरमुकप्रेत शिरःपूरकप्रथमपिण्डेऽत्र प्रत्यवनेनिक्ष्व ते मया दीयते तवोपतिष्ठताम्" (पृ.६७) इत्यादि प्रकारका (द्रष्टव्य– पृ.७४, १०३, १११, ११२, १२७, १२९; [१४२, १४३, १५४, १५५, १६१, १६५, १६६, १७४, १७५, १८५, १८६, १८७]) वाक्यरचनाका दृष्टिले पनि सावद्य वाक्यको पनि हठात् समर्थन गर्न प्रयास गर्नु भएको देखिञ्छ (मर्यादा, पृ.४५)। एसबाट पनि वा़ँहाँमा विवेकदृष्टिको न्यूनता स्पष्ट रूपमा झल्कञ्छ।

## गोत्र-सगोत्रशब्दको प्रयोगको विचार

**डा.महाशयले** *"सकार, कुश, तिल आदिलाई कुतप मानिएको छ। कुतपको प्रयोग विना विहित क्रियाबाट मृतक प्रेतत्वबाट निवृत्त हुन सक्दैन। अतः गोत्रको पछाडि सकार जोडेकै हुनुपर्छ"* (मर्यादा, पृ.४५-४६) भन्नुभएको रच। धन्य हो वा़ँहाँको समझ। गोत्रशब्दका अगाडि स भएकै हुनपर्छ भन्न पर्नेमा *"गोत्रको पछाडि"* भन्नु भएको छ। त्यो स वा़ँहाँले बुजे झैँ (मर्यादा, पृ.४९) काश्यपादिशब्दका अन्त्यमा रहने स हैन, गोत्रशब्दका आदिमा रहने स हो। वा़ँहाँले आँफुले वृत्तिका लागि पडे-पडाएको निर्णयसिन्धु ग्रन्थ मात्र पनि चित्त दिएर पड्नुभएको भए "गोत्र-सगोत्रयोः पर्यायत्वात्" (पृ.२९९) भन्ने प्रयोगबाट शिक्षा लिइ "गोत्रशब्दका अगाडि सकार रहेकै हुनपर्छ" भन्न जान्नुहुन्थ्यो होला। वा़ँहाँले आँफ्नो अध्ययनलाइ अल्लि फराकिलो बनाउन सकेको भए संस्कृतभाषामा अल्लि बर्ता प्रचलित तत्त्व-सतत्त्व शब्दहरुको पर्यायवाचित्वबाट पनि शिक्षा लिएर ठिक कुरा बोल्न सक्नुन्थ्यो होला। अस्तु। गोत्रशब्दको वा सगोत्रशब्दको उच्चारण गर्ने विषयमा पनि लघुस्मृति-पुराणादिग्रन्थका वचनहरुमा मतभेद पाइञ्छ र एस विषयमा अगिका धर्मशास्त्रनिबन्धकारहरुले निर्णय दिएको पनि पाइञ्छ। टाडा जान पर्दैन, डा.महाशयले वृत्तिका निम्ति पडे-पडाएको ग्रन्थ निर्णयसिन्धुमै "तेन गोत्र-सगोत्रशब्दयोः पर्यायत्वाच् छाखाभेदाद् व्यवस्थेति शूलपाणिः। एतद् येषामाम्नातं तेषामेव" भन्ने कुरा (पृ.२९९) पाइञ्छ। एसबाट गोत्रशब्द र सगोत्रशब्द पर्यायवाचक भएकाले अर्थ उइ हो, जसका शाखामा अगाडि सकार भएको गोत्रशब्दको उच्चारण गर्नु भन्ने विधान पाइञ्छ तिनले अगाडि सकार भएको गोत्रशब्दको उच्चारण गर्नपर्छ, जसका शाखामा तेस्तो विधान छैन तिनले गोत्रशब्दको उच्चारण गरे हुञ्च अगाडि सकार भएको गोत्रशब्दको उच्चारण गर्न आवश्यक छैन भन्ने कुरा स्पष्टै बुजिञ्छ। माध्यन्दिनीय-वाजसनेयिशाखाका मूल ग्रन्थमा अगाडि सकार भएको गोत्रशब्दको प्रयोग गर्नू भन्ने विधान देखिएको छैन; तेसैले रुद्रधरले पनि श्राद्धविवेकमा "अद्याऽमुकगोत्र पितरमुकप्रेत" (पृ.६५) इत्यादि वाक्यमा माथि उद्धृत हरिहरादिका वाक्यमा झैँ सगोत्रशब्दको प्रयोग गरेका

छैनन्; गोत्रशब्दको नै प्रयोग गरेका छन् (द्रष्टव्य– पृ.६६, ६७, ६८, ७२, ७४, ७५, ८१, ८२, ८३, ९३, ९६, ९७, १०३, १०५, १०७, १०८, १०९, ११०, १११, ११२, ११३, ११५, ११६, ११७, ११८, ११९, १२७, १२८, १२९, १३१, १३२, १३३, १३४ इत्यादि)। हामिले जानेसम्मका नेपालपाहाडका प्राचीनतम अन्त्यपद्धतिकार सत्यधरतनूज रामोपाध्यायसूरिले पनि हामिले देखेका हस्तलिखित अन्त्यपद्धतिमा "अद्याऽमुकगोत्राऽमुकप्रेतैष सतिलतोयाञ्जलिस् ते मया दीयते तवोपतिष्ठताम्" इत्यादि वाक्यमा सगोत्रसब्दको प्रयोग गरेका छैनन्, गोत्रशब्दको नै प्रयोग गरेका छन् (पत्र ५, पूर्वपृष्ठ)। सत्कर्मरत्नावलीमा पनि सबै कुरामा प्रायः रामोपाध्यायकै अन्त्यपद्धतिको अनुसरण गर्दै लेखिएका "अद्यामुकगोत्राऽमुकप्रेतैष" इत्यादि वाक्यहरुमा (प्रथमभाग, पृ.४९९) कैँ पनि सगोत्र शब्दको प्रयोग गरिएको देखिँदैन। बाबुमाधवप्रसादले प्रकाशित गरेका र बालकृष्णाचार्यले प्रकाशित गरेका अन्त्यपद्धतिहरुमा पनि हाम्रा सङ्ग्रहमा भएका संस्करणमा उक्त प्रकारका स्थलहरुमा कैँ पनि सगोत्रशब्दको प्रयोग देखिँदैन। प्रायः रामोपाध्यायकै अन्त्यपद्धति सारेर लेखिएका म.सं.वि.वि.का कर्मकाण्डभास्करका अन्त्यकर्मपद्धतिमा पनि "अद्येहाऽमुकगोत्राऽमुकप्रेत" (पृ.५२९, ५३१-५३२) इत्यादि स्थलमा सर्वत्र गोत्रशब्दको नै प्रयोग देखिञ्छ। सगोत्रशब्दको प्रयोग देखिँदैन। नित्यानन्द पन्त पर्वतीयका अन्त्यकर्मदीपकमा पनि "अद्येहाऽमुकगोत्राऽमुकप्रेत चितादाहजनिततापतृषोपशमाय" (पृ.३०) इत्यादि वाक्यमा कैँ पनि सगोत्रशब्दको प्रयोग देखिँदैन। वायुनन्दनमिश्रका श्राद्धसङ्ग्रहमा पनि "अद्याऽमुकगोत्र पितरमुकप्रेत भूमितुष्टच्यर्थं मृतस्थाने शवो नाम एष पिण्डस्ते मया दीयते तवोपतिष्ठताम्" (पृ.१३) इत्यादि वाक्यमा कहीँ पनि सगोत्रशब्दको प्रयोग पाइँदैन। उक्त विवरणबाट डाक्टरमहाशयको *"गोत्रशब्दको पछाडि* (अगाडि?) *सकार जोडेकै हुनुपर्छ"* भन्ने कुरा (मर्यादा, पृ.४६) मान्य नभएको तथ्य स्पष्ट हुञ्च। तेत्ति मत्रै हैन, वीरमित्रोदयमा "तथाऽप्यत्र गोत्रशब्द एव प्रयोक्तव्यः 'अमुकामुकगोत्रैतत् तुभ्यमन्नं स्वधा नमः' इति ब्रह्मपुराणवचनात्" भनि गोत्र-सगोत्र शब्द पर्यायवाचि नै भएपनि श्राद्धमा गोत्रशब्दको नै उच्चारण गर्न उचित छ भन्ने देखाएको पाइञ्छ (श्राद्धप्रकाश, पृ.३०)। एसबाट पनि प्रेतोदकदानादिवाक्यमा सगोत्रशब्दकै उच्चारण गर्नपर्छ भन्ने सिद्धान्त सार्वत्रिक रूपमा मान्य नभएको कुराको पुष्टिलाइ नै बल मिल्ने देखिञ्छ।

## अन्नशब्दको प्रयोगको विचार

अब प्रेतपिण्डदानमन्त्रमा अन्नशब्दको प्रयोगका विषयमा विवेचन प्रस्तुत गरिञ्छ। एस विषयमा डा.महाशयले *"महालये गयायाञ्च प्रेतश्राद्धे दशाहिके। पिण्डशब्दप्रयोगः स्यादन्नमन्यत्र कीर्तयेत्"* (हेमाद्रिश्राद्धकल्प, पृ.१४३६) भन्ने लौगाक्षिको वचन देखाएर (मर्यादा, पृ.४६, टि.१२) *"महालयश्राद्ध, गयाश्राद्ध र प्रेतश्राद्धको पिण्डदान सङ्कल्पवाक्यको अन्तिममा "**पिण्डः**" यो शब्द नै राख्नुपर्छ अन्न शब्द राख्न पाइँदैन भन्ने अपरिवर्तनीय शास्त्रीय व्यवस्था छ"* भन्नुभएको रच (मर्यादा, पृ.४६)। किन्तु कृष्णयजुर्वेदपट्टिका स्मृतिकार

लौगाक्षिको उक्त वचनको व्यवस्था सर्वमान्य वा सबैका लागि अपरिवर्तनीय व्यवस्था हैन भन्ने कुरा हाम्रै परम्पराको राम्ररि अवलोकन गरेमा पनि स्पष्ट हुञ्च। लौगाक्षिको उक्त व्यवस्था हाम्रा शाखामा पनि सर्वथा मान्य हुँदै आएको भए महालयादिमा नपर्ने क्षयाहका सांवत्सरिक एकोद्दिष्टश्राद्धका पिण्डदानवाक्यमा अन्नशब्दको नै प्रयोग गर्ने हाम्रो परम्परा रैआएको पाइन पर्थ्यो। तेस्तो परम्परा त पाइँदैन। रुद्रधरले श्राद्धविवेकका चतुर्थपरिच्छेदका "ॐ अद्यामुकगोत्र पितरमुकशर्मन् सांवत्सरिकैकोद्दिष्टश्राद्धे एष ते पिण्डः स्वधा" (पृ.१५५) इत्यादि पिण्डदानवाक्यमा पिण्डशब्दको नै प्रयोग देखाएका छन्। त्याँहाँ उनले लौगाक्षिको व्यवस्था मानेर अन्न-शब्दको प्रयोग गरेका छैनन्। सत्कर्मरत्नावलीकारले पनि "ॐ अद्याऽमुकगोत्राऽस्मत्पितरमुकशर्मन् वसुस्वरूपा-ऽद्यकर्तव्य-सांवत्सरिकैकोद्दिष्टश्राद्धे एष पिण्डोऽमृतस्वरूपोऽक्षय्यतृप्तिहेतोस् ते स्वधा" (प्रथमभाग, पृ.५७०) भनेर पिण्डशब्दको प्रयोग देखाएका छन्, अन्नशब्दको प्रयोग गरेका छैनन्। ऐलेका चल्तिका एकोद्दिष्टश्राद्ध-पद्धतिहरुमा पनि तेस्तै प्रकारका वाक्य देखिञ्छन्। पिण्डशब्दको पुंलिङ्गमा नै प्रयोग भएको पाइञ्छ। संस्कृत-विश्वविद्यालयका कर्मकाण्डभास्करमा नित्यानन्दादिकृत कुमाउँतिरका पद्धतिका प्रभावले गर्दा होला "एषोऽन्नपिण्डः" भनिएको देखिञ्छ (पृ.४७०)। डाकुरनाथ-शर्माका कुमाइँहरुमा प्रचलित श्राद्धविधिमा पनि "एषोऽन्नपिण्डः" नै भनिएको (पृ.१७) देखिञ्च। इ दुइ प्रयोगमा पनि पिण्डशब्दलाइ छोडिएको छैन। मैथिलसम्प्रदायका रामचन्द्रझा-सम्पादित वाजसनेयिका एकोद्दिष्टश्राद्धपद्धतिमा (सन् १९८९, पृ.१८,२६) र वायुनन्दनका श्राद्धसङ्ग्रहमा पनि (पृ.१६७) "एष ते *पिण्डः* स्वधा" भनिएको छ। प्रयागका पण्डित-परिषद्का मन्त्रि श्रीधरशास्त्रिले बनाएका २०४८ संवत्मा प्रयागकै भारती-परिषद्ले प्रकाशित गरेका एकोद्दिष्टश्राद्धपद्धतिमा पनि "एष पिण्डस्ते स्वधा" भनिएको देखिञ्छ। एसबाट लौगाक्षिका उक्त वाक्यले गरेको व्यवस्थालाइ वाजसनेयिहरुका परम्पराले वास्तै नगरेको कुरा बुजिन आउँछ। हेमाद्रिको "महालये=तीर्थविशेषे" भन्ने (पृ.१४३६) व्याख्या मानेमा त सोरसरातका श्राद्धमा पनि लौगाक्षिका वचनअनुसार अन्नशब्दकै प्रयोग गर्नपर्ने हुञ्छ। हाम्रा परम्परामा तेस्तो कुरा पनि देखिँदैन। सोरसरातका पिण्डदानवाक्यमा चल्तिका पद्धतिहरुमा पिण्डशब्दकै प्रयोग गरिएको पाइञ्छ। याँहाँ चल्तिका पद्धतिहरुले पनि गरेको "पिण्डः" भन्ने प्रयोग उचित छ भन्न खोजिएको हैन; चल्तिका पद्धतिले लौगाक्षिका वचनको उक्त व्यवस्थाको वास्ता गरेको देखिँदैन, तसर्थ माध्यन्दिनीय-वाजसनेयिहरुका लागि लौगाक्षिको उक्त वचनको व्यवस्था अमान्य रैआएको देखिञ्छ भनिएको मात्र हो। पिण्डदानवाक्यका विषयमा स्मृतिचन्द्रिकाका श्राद्धकाण्डमा (पृ.३८३) देवण्णभट्टले "यस्य च स्वस्य गृह्ये विधानान्तरं नोपदिश्यते पिण्डपितृयज्ञविधानं वा निर्दिश्यते तेनैव पिण्डपितृयज्ञकल्पेन पिण्डदानं कार्यं नाऽन्येनेति मन्तव्यम्" भनेका छन्। एसबाट हाम्रा गृह्यसूत्रमा छुट्टै पिण्डदानवाक्यको उपदेश नभएकाले र कात्यायनले श्राद्धकल्पसूत्रका लौकिक-सर्वश्राद्धप्रकृतिभूत अपरपक्षश्राद्धको प्रतिपादन गर्दा द्वितीय कण्डिकामा "पिण्डपितृयज्ञवदुपचारः" भनेकाले हाम्रा शाखाका

श्राद्धहरुको पिण्डदानवाक्य पिण्डपितृयज्ञको पिण्डदानवाक्यजस्तै हुनपर्ने कुरा धर्मशास्त्र-निबन्धकारहरुले पनि मानेकै बुजिन आउँछ। लौगाक्षिका वचनको विचारबाट पनि वाजसनेयिहरुका पिण्डदानवाक्यमा "एतत् ते अन्नम्" वा "एतत् ते पिण्डम्" एस्तो प्रयोग हुनसक्ने कुरा हेमाद्रिले सूचित गरेका छन् (पृ.१४३५) र प्रयोगवाक्य भनि "अमुकगोत्राऽस्मत्पितरमुकशर्मन्नेतत् तेऽन्नं स्वधा नम इदममुकगोत्रायाऽस्मत्पित्रे अमुकशर्मणे न मम" एस्तो वाक्य देखाएका छन् (पृ.१४३६)। एस विषयमा विचार गरेर मित्रमिश्रले "तेन प्रकृतौ एष ते पिण्ड इति गोभिलवाक्याद् गौभिलीयानामेष ते पिण्ड इत्येव प्रयोगः, वाजसनेयिनामपि 'एतत् ते पिण्डमित्युक्त्वा दद्युर् वाजसनेयिनः' इति भविष्यपुराणवचनाद् एतत् ते पिण्डम् इत्येव प्रयोगः" भनि वाजसनेयिहरुले "एष ते पिण्डः" भन्न नहुने "एतत् ते पिण्डम्" भन्न पर्ने कुरा बोलेका छन् र गोभिलीयहरुमा र वाजसनेयिहरुमा लौगाक्षिका वचनको व्यवस्था लागु नहुने अरुमा मात्र त्यो लागु हुने कुरा गरेर अन्त्यमा आँफ्ना-आँफ्ना शाखाअनुसार व्यवस्था हुञ्छ भन्ने कुरा देखाएका छन् (श्राद्धप्रकाश, पृ.२५८-२५९)। साथै अन्त्यमा "एवं प्रयोगवाक्यं कातीयानाम् अमुकगोत्रास्मत्पितरमुकशर्मन्नेतत् तेऽन्नं पिण्डं वा स्वधा नमः, इदममुकगोत्रायाऽस्मत्पित्रेऽमुकशर्मणे न ममेति" भनेका छन् र बौधायनादि-शाखाका नानाप्रकारका पिण्डदानवाक्यहरु पनि देखाएका छन् (पृ.२५९-२६०)। एति कुराबाट पिण्डदानमन्त्र आँफ्ना-आँफ्ना शाखासूत्रअनुसारै प्रयुक्त हुनपर्ने कुरा विवेकशील आस्तिक पाठकहरुले पनि अवश्य बुज्न सक्नुहुने नै छ। डा.महाशयले पनि पाठ्यक्रममा भएको र आँफुले वृत्तिका लागि पडे-पडाएको निर्णयसिन्धुग्रन्थ मात्र पनि राम्ररि ध्यान दिएर पड्नु भएको भए त्याँहाँ अनेक कृत्यका विषयमा "स्वस्वसूत्राद् व्यवस्था" (पृ.३८), "शाखाभेदाद् व्यवस्था" (पृ.२९९), "तेषां शाखाभेदेन व्यवस्था" (पृ.३२०) इत्यादि भनिएको देखेपछि पिण्डदानमन्त्रवाक्य पनि शाखाभेदले नै व्यवस्थित हुञ्छ भन्ने कुरा बुज्न सक्नै पर्नि हो; तेसमा पनि अन्त्यकर्म शाखाभेदले भिन्न हुने कुरा जनाइ (पृ.४०१) प्रेतलाइ दिइने जलाञ्जलिको सङ्ख्या पनि शाखाभेदले व्यवस्थित हुने कुरा देखाइ (पृ.४०८) प्रेतोदकदानका विषयमा "दानवाक्ये विकल्पः" (पृ.४०८) भनेको समेत देखेपछि त प्रेतपिण्डदानमन्त्र पनि शाखाभेदले फरक-फरक हुन सक्छन् भन्ने कुरा राम्ररि नै बुज्न सक्नै पर्ने हो। वाँहाँ आदित्यपुराणादिका वचनमा (निर्णयसिन्धु, पृ.४११-४१२) मात्र भर पर्न नपर्ने हो। वाँहाँको बुद्धि ईर्ष्याद्वेषादिले कलुषित हुन गएकाले हो कि केले हो वाँहाँले उक्त स्वशाखा-व्यवस्थाको कुरा बुज्न नसक्नु भएको, वहिँ जान्नुञ्च। स्वशाखाश्रुतिसूत्रले विधान गरेका "असावेतत् ते" भन्ने पिण्डदानमन्त्रका एतत् पदसित मेल नखाने पुंलिङ्गको पिण्डशब्दको कात्यायनानुयायि माध्यन्दिनीय-वाजसनेयिहरुले कुनै पनि श्राद्धका पिण्डदानवाक्यमा प्रयोग गर्नु सर्वथा स्वश्रुतिसूत्रविरुद्ध कुरा देखिञ्छ। एस विषयमा देवण्णभट्टकृत स्मृतिचन्द्रिकाका श्राद्धकाण्डमा (पृ.३६८-३६९), हेमाद्रिकृत चतुर्वर्गचिन्तामणिका परिशेषखण्डका श्राद्धकल्पमा (पृ.१४३५), मित्रमिश्रकृत वीरमित्रोदयका श्राद्धप्रकाशमा (पृ.२५८-२५९) र कात्यायनश्राद्धकल्प-

सूत्रव्याख्या श्राद्धकाशिकामा (पृ.४७९-४८०) पनि विचार भएको छ। त्याँहाँ वाजसनेयिहरुले स्वश्रुतिसूत्रको एतत् पदको अनुरूप अन्नम् वा पिण्डम् वा पिण्डान्नम् भन्न पर्ने निष्कर्षहरु दिइएका पनि देखिन्छन्। तसर्थ धर्मशास्त्राचार्य प्राध्यापक डाक्टरमहाशयको *"पिण्डदान सङ्कल्पवाक्यको अन्तिममा "**पिण्डः**" यो शब्दनै राख्नुपर्छ"* भन्ने भनाइ (पृ.४६) अबोधमूलक नै देखिन्छ। अरु श्राद्धहरुमा अन्नम् वा पिण्डम् वा पिण्डान्नम् वा पिण्डरूपमन्नम् भनिने कुरा मानिएपनि प्रेतपिण्डदानका वा प्रेतश्राद्धका पिण्डदानवाक्यमा "एष पिण्डः" यो पुलिँलिङ्गि प्रयोग नै गर्नपर्छ भन्नु पनि पिण्डपितृयज्ञप्रकरणमा स्वश्रुतिसूत्रहरुमा आएका "असावेतत् ते" भन्ने पिण्डदानमन्त्रको, स्वचरणगुरु याज्ञवल्क्यका नामको स्वचरणसम्बद्ध स्मृति याज्ञवल्क्यस्मृतिको "पिण्डयज्ञावृता देयं प्रेतायाऽन्नं दिनत्रयम्" (३।१६) भन्ने वचनको र तेस वचनको प्राचीनतम व्याख्याकार विश्वरूपाचार्यका व्याख्याको पनि विरुद्ध कुरा हुनाले वाजसनेयिहरुका लागि सर्वथा अमान्य देखिन्छ।

याँहाँनेर एउटा आर्को प्रश्न उठ्न सक्छ। उक्त श्रुतिसूत्रहरुमा आएका "असावेतत् ते" भन्ने मन्त्रका असौशब्दले सङ्केत गरेका आधारमा परम्परालाइ, श्रुतिसूत्रव्याख्याकार-हरुका तथा धर्मशास्त्रनिबन्धकारहरुका व्याख्याहरुलाइ र कतिपय प्राचीन-अर्वाचीन पद्धतिकारहरुका प्रयोगलाइ पनि हेरेर असौपदका ठाममा "अस्म्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत" राखेर श्रुतिसूत्रहरुका "एतत् ते" पदहरुलाइ जस्ताको तस्तै राखि वैदिक-मन्त्र-सङ्ग्रहमा (पृ.५८,६८) पिण्डदानमन्त्र देखाइएको कुरा त माथिका स्पष्टीकरणहरुबाट स्पष्ट भएकै छ। किन्तु तेस मन्त्रमा "अन्नम्" यो पद किन जोडियो त ? एस प्रश्नको उत्तरका लागि तलको स्पष्टीकरण प्रस्तुत छ। "अस्म्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत एतत् ते" एत्ति नै उच्चारण गरेमा पिण्डदानमन्त्र पूर्ण हुन्छ, एतत्-शब्दले पिण्डलाइ निर्देश गरिहाल्च, पिण्डशब्द नपुंसकलिङ्गि पनि हुन्च, तसर्थ त्याँहाँ कुनै पदको अध्याहार गर्नु आवश्यक छैन भन्ने *भावको* आँफ्नो मत भएको र अरु कसैले "पिण्डरूपमन्नम्" भन्ने अध्याहार गर्नपर्छ भनेको कुरा पनि देवण्णभट्टले लेखेका छन् (स्मृतिचन्द्रिका, श्राद्धकाण्ड, पृ.३६८-३६९)। हेमाद्रिले भने त्याँहाँ "अन्नम्" वा "पिण्डम्" भन्ने पदको अध्याहार गर्नपर्ने कुरा देखाएका छन् (च.चि., प.ख., श्रा.,पृ.१४३५)। मित्रमिश्रले पनि हेमाद्रिको अध्याहारविषयको मतको अनुमोदन गरेको देखिन्छ (वीरमि.श्रा., पृ.२५९)। श्राद्धकाशिकाकारले त श्रुतिसूत्रको विरोध हुन जाला भन्ने डर लाग्च भने श्राद्धकल्पलतामा भने झैँ "पिण्डान्नम्" पद अध्याहार गरेर प्रयोग गर्न उचित हुन्छ भन्ने कुरा देखाएका छन् (पृ.४७९-४८०)। कात्यायनश्रौतसूत्रका व्याख्याताहरुमध्ये कर्कोपाध्यायले "अन्नम्" भन्ने पदको अध्याहार गर्नपर्छ भनेका छन् (का.श्रौ.कर्कभाष्य ४।१।११)। महादेवले पनि तेसैको समर्थन गरेको बुजिन्छ। देवयाज्ञिकले भने स्मृतिचन्द्रिकाकारले झैँ नै कुनै अध्याहारको आवश्यकता नमानेको देखिन्छ। गृह्यसूत्रभाष्यकार विश्वनाथले पनि "अमुकसगोत्रामुकप्रेतैतत् त इति पिण्डदानम्" भनेर (पृ.३८१) अध्याहार गर्न नपर्ने भन्ने पक्ष अँगालेको देखिन्छ। गदाधरदीक्षितले

पारस्करगृह्यसूत्रभाष्यमा पिण्डपितृयज्ञप्रयोगमा "पितरमुक एतत् ते अन्नम् इति मन्त्रेण रेखामूले पिण्डदानम्" इत्यादि लेखेर (पा.गृ.भा.१।१२, पदार्थक्रम, पृ.१३५) तथा अपरपक्षश्राद्धप्रयोगपद्धतिमा पनि "अमुकगोत्र पितरमुकशर्म्मन्नेतत् तेऽन्नं स्वधेति पिण्डदानम्" भनेर (पृ.४६५) "अन्नम्"-पदको अध्याहार गर्ने पक्षको नै समर्थन गरेको देखिन्छ। विद्याधर गौडले त कात्यायनश्रौतसूत्रवृत्ति सरलामा (४।१।११) "अमुकगोत्र अमुकशर्मन् यजमानस्य पितः एतत् ते पिण्डान्नं स्वधा" भन्ने प्रयोग देखाएर श्राद्धकल्पलताकारादिले देखाएको पक्ष अँगालेको देखिन्छ। नित्यानन्द पन्त पर्वतीयले कातीयेष्टिदीपकका पिण्डपितृयज्ञप्रयोगमा "अमुकगोत्र यजमानस्य पितः अमुकशर्मन् एतत् तेऽन्न६ स्वधा" इत्यादि पिण्डदानवाक्य देखाइ "अन्नम्"-पदको अध्याहार गर्ने कर्कोपाध्यायको पक्षको अनुसरण गरेको देखिन्छ (पृ.१०९)। स्वचरणगुरुका नामको याज्ञवल्क्यस्मृतिमा पनि "पिण्डयज्ञावृता देयं प्रेतायाऽन्नं दिनत्रयम्" (३।१६) भनि अन्नशब्दको उल्लेख गरिएको देखिन्छ। वीरमित्रोदयमा (श्राद्ध.पृ.३०) उद्धृत ब्रह्मपुराणको "अमुकामुकगोत्रैतत् तुभ्यमन्नं स्वधा नमः" भन्ने वचनले पनि सामान्य श्राद्धका पिण्डदानवाक्यमा अन्नशब्दको प्रयोग हुने कुरा देखाएको छ । वाल्मीकिरामायणमा पनि प्रेतलाइ दिइने पिण्डलाइ प्रेतभोज्य अन्नकै रूपमा लिइएको कुरा "ऐङ्गुदं बदरैर् मिश्रं पिण्याकं दर्भसंस्तरे। न्यस्य रामः सुदुःखार्तो रुदन् वचनमब्रवीत्॥ इदं भुङ्क्ष्व महाराज प्रीतो यदशना वयम् । यदन्नः पुरुषो भवति तदन्नास्तस्य देवताः" (अयोध्या.१०३।२९,३०) भन्ने वचनबाट बुजिन्छ । उक्त सबै कुराहरुको विचार गरेर वैदिक-मन्त्र-सङ्ग्रहकारले स्वश्रुतिसूत्रविहित पिण्डदानमन्त्रवाक्यमा "अन्नम्"-पदको अध्याहार गर्ने पक्ष स्पष्टत्वार्थ लिएकामा कुनै अनौचित्य देखिँदैन।

## वैदिक-मन्त्र-सङ्ग्रहका प्रेतपिण्डदानमन्त्रको स्वशाखाश्रुतिसूत्रानुकूलत्व

माथि उपस्थापित गरिएका स्पष्टीकरणहरुको राम्ररि मनन गरेमा वैदिक-मन्त्र-सङ्ग्रहमा दिइएको "अस्म्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत एतत् ते अन्नम्" भन्ने (पृ.५८) प्रेतपिण्डदानमन्त्रको सर्वथा स्वशाखाश्रुतिसूत्रानुसारित्व र हरिहरादिका माथि ठामठाममा उल्लिखित प्रेतपिण्डदानवाक्यहरुको स्वशाखाश्रुतिसूत्रादिप्रतिकूलत्व स्पष्ट रूपमा बुज्न सकिन्छ। हरिहरका "अमुकसगोत्राऽमुकशर्मन् प्रेत एष ते शिरःपूरकः पिण्डो मया दीयते" भन्ने (पृ.३७५) प्रेतपिण्डदानवाक्यको "एष पिण्डः" भन्ने पुंलिङ्गि प्रयोग स्वशाखाश्रुतिसूत्रको प्रतिकूल भएको कुरामा र "शिरःपूरकः" भन्ने अंश र "मया दीयते" भन्ने अंश पनि स्वशाखाश्रुतिसूत्रविहित मन्त्रवाक्यमा अनाकाङ्क्षित भएका कुरामा विवेकशील पाठकहरुको ध्यान आकृष्ट गरिन्छ। एस्तै कुरा गदाधरका "अमुकसगोत्राऽमुकप्रेतैष ते शिरःपूरकपिण्डो मया दत्तः" भन्ने (पृ.४८९) वाक्यका सम्बन्धमा पनि बुज्नपर्छ। अब नित्यानन्दका "अमुकगोत्राऽमुकप्रेत रौरवनामनरकोत्तारणार्थं मूर्धावयवनिष्पत्त्यै एष पूरकपिण्डो मद्दत्तस्तवोपतिष्ठताम्" भन्ने प्रेतपिण्डदानवाक्यमा छुट्टै टिप्पणी गरिरनु

**आवश्यक देखिँदैन। एसैबाट रुद्रधर-रामोपाध्याय-सत्कर्मरत्नावलीकार-वायुनन्दनमिश्र-दधिरामादिका प्रेतपिण्डदानवाक्यको पनि गति स्पष्ट हुञ्छ। हरिहर-रुद्रधर-गदाधर-नित्यानन्दादिका प्रेतपिण्डदानवाक्यहरुको तुलनात्मक अध्ययनबाट पनि तिनको परस्पर-विसंवादित्व, स्वशाखाश्रुतिसूत्राऽनियन्त्रितत्व र अव्यवस्थितत्व पनि स्पष्ट हुञ्छ।**

**डाक्टरमहाशयले धेरै विद्वत्ता छाँटेर** *'प्रथमदिनसम्बन्धी पिण्डदान गर्दा* ***"रौरवनामनरकोत्तारणाय एष शिरः पूरक प्रथमः पिण्डस्ते मया दीयते तवोपतिष्ठताम्"*** *यस्तो वचन पारेकै हुनुपर्छ'* **इत्यादि भन्नु भएको रछ (मर्यादा, पृ.४८)। बिचरा!! वाँहाँका अतितीक्ष्ण गवेषणानिपुण दृष्टिले वाँहाँले** *शास्त्रमर्मज्ञ, उच्चतम उपाधिले विभूषित, विचारशील, दोषज्ञ, गहनतम-महत्त्वपूर्ण-प्रामाणिकग्रन्थ बनाउने विचक्षण, प्रकाण्ड विद्वान्* **मानेका हरिहर-गदाधर-विश्वराम(नाथ?)-रुद्रधर-वायुनन्दनहरुका पद्धतिहरुमा "रौरवनाम-नरकोत्तारणाय" इत्यादि प्रकारका पदहरु छँदैछैनन् भन्ने कुरा देख्नै सकेनछ। हरिहरको वाक्य** "अमुकसगोत्राऽमुकशर्मन् प्रेत एष ते शिरःपूरकः पिण्डो मया दीयते" **(पृ.३७५) भन्ने छ; गदाधरको वाक्य** "अमुकसगोत्रामुकप्रेतैष ते शिरःपूरकपिण्डो मया दत्तः" **(पृ.४८९) भन्ने छ; विश्वनाथको वाक्य** "अमुकसगोत्रामुकप्रेतैतत् ते" **(पृ.३८१) भन्ने छ; रुद्रधरको वाक्य** "ॐ अद्याऽमुकगोत्र पितरमुकप्रेत एष शिरःपूरकः प्रथमः पिण्डस्ते मया दीयते तवोपतिष्ठताम्" **भन्ने छ (श्राद्धविवेक, पृ.६७)। वायुनन्दनको वाक्य रुद्रधरको जस्तै छ। उनले ओङ्कारको प्रयोग गरेका छैनन् (श्राद्धसङ्ग्रह, पृ.३९)। हाम्रा परम्परामा पनि** "रौरवनामनरकोत्तारणाय" **इत्यादि प्रकारका पद प्रयुक्त नहुने गरेको देखिञ्छ। रामोपाध्यायसूरिका हस्तलिखित अन्त्यपद्धतिमा हाम्रा सङ्ग्रहमा भएका छायाप्रतिलिपिमा पनि** "रौरवनामनरकोत्तारणाय" **इत्यादि प्रकारका पदहरु छैनन् (पत्र७, पूर्वपृष्ठ, पत्र१७, दुवै पृष्ठ)। सत्कर्मरत्नावलीमा पनि तेस्ता सबै नै पदहरु कोष्ठभित्र राखिएकाले ति पदहरु सबै नै प्रक्षिप्त बुजिञ्छन् (प्रथमभाग, पृ.५००)। मिथिलाका वाजसनेयिहरुमा वर्तमान कालमा प्रचलित श्राद्धचिन्तामणिकार-वाचस्पतिमिश्रकृत श्राद्धपद्धतिका दशगात्रपिण्डदानविधिमा पनि तेस्ता पद देखिँदैनन्। ति उत्तरणीय नरकका नाम र पूरणीय अवयवका नाम पनि विभिन्न ग्रन्थमा केइ अंशमा फरक-फरक पनि दिइएकाले विगीत पनि देखिञ्छन्। तसर्थ वैदिकहरु तेस पचेडामा फस्ने कुनै औचित्य र आवश्यकता पनि देखिँदैन। बङ्गालि प्रसिद्ध धर्मशास्त्रनिबन्धकार गोविन्दानन्दले शुद्धिकौमुदीमा (पृ.१३१-१३२) पूरणीय अवयवविशेषको उल्लेख गर्नु पनि निष्प्रमाण र अनावश्यक हो भन्ने कुरा खोलेर लेखेको पनि देखिञ्छ। रामले पिण्ड दिँदा** "इदं भुङ्क्ष्व महाराज प्रीतः" **भन्ने वाक्य बोलेको भन्ने कुरामा (अयोध्या.१०३।३०) पनि ध्यान दिनु उचित देखिन्छ। अत एव एस सम्बन्धमा पारस्करगृह्यसूत्रका भाष्यकार विश्वनाथको उपर्युक्त प्रयोग नै धेरै अंशमा हाम्रा शाखाका मूल परम्पराको विशेष अनुकूल देखिञ्छ। तसर्थ डाक्टरमहाशयको उपर्युक्त भनाइ पनि अविवेकमूलक र अज्ञानमूलक नै देखिञ्छ। वाँहाँले देखाएको** *"अद्येहामुकगोत्रामुकप्रेत (अद्येह काश्यपसगोत्र कृष्णप्रसाद प्रेत) रौरवनाम-*

*नरकोत्तारणाय एष शिरः पूरकः प्रथमः पिण्डस्ते मया दीयते तवोपतिष्ठताम्"* भन्ने (मर्यादा, पृ.४९) प्रेतपिण्डदानवाक्यसित हरिहरादि प्राचीन ग्रन्थकारका कुनै प्रेतपिण्डदानवाक्य पनि पूर्णतया मेल त खाँदैनन् भन्ने कुरा माथिका उद्धरणहरुबाट स्पष्ट हुन्छ। त्यो कुरा सम्बद्धग्रन्थहरुका उक्त स्थलहरु पल्टाएर हेरेर विवेकशील पाठकहरुले स्पष्ट रूपमा बुज्न सक्नुञ्च। वाँहाँको त्यो वाक्य नित्यानन्दका वाक्यसित (अन्त्यकर्मदीपक, पृ.३६), दधिराम मरासिनिका वाक्यसित (कर्मकाण्डभास्कर, पृ.५३४), बाबु माधवप्रसादले प्रकाशित गरेका र बालकृष्णाचार्यले प्रकाशित गरेका अन्त्यपद्धतिहरुका वाक्यसित पनि पूर्णतया मेल त खाँदैन भन्ने कुरा पनि पाठकहरुले बुजिराखे जाति नै होला। प्रमाणपत्रधारि धर्मशास्त्राचार्य प्राध्यापक डाक्टरमहाशयले देखाएको उक्त वाक्य माध्यन्दिनीय-वाजसनेयि-शतपथब्राह्मण-कात्यायनश्रौतसूत्र-पारस्करगृह्यसूत्र-कात्यायनश्राद्धकल्पसूत्र-मन्त्रभ्रान्तिहरसूत्र-याज्ञवल्क्य-स्मृतिहरुको पूर्णतया प्रतिकूल र ति ग्रन्थको अनादर गरेर अरु ग्रन्थका पछि लागेर रचिएको हुनाले माध्यन्दिनीय-वाजसनेयिहरुका लागि सर्वथा त्याज्य हो, ग्राह्य हैन। डाक्टरमहाशयका उक्त वाक्यको शतपथब्राह्मणादिप्रतिकूलता माथि गरिसकिएका स्पष्टीकरणहरुबाट नै मूल वैदिक मार्गका आस्तिक र विवेकशील पाठकहरुले स्पष्ट रूपमा बुज्न सक्छन्।

## प्रेतश्राद्धमा स्वधानमःशब्दको प्रयोगको विचार

एकादशाहिकश्राद्धका पिण्डदानमन्त्रवाक्यमा "स्वधा नमः" इ शब्दको प्रयोग आश्वलायनशाखादि अन्यशाखाका वा तन्मूलक लघुस्मृति-पुराणका कतिपय वचनबाट निषिद्ध देखिन्छ तापनि स्वशाखासूत्रबाट निषिद्ध नभएकाले, परशाखीय वा परशाखामूलक वचनले निषेध गरेपनि स्वशाखा-वचनले निषेध नगरेमा स्वशाखावचनप्राप्त तथा न्यायप्राप्त कुराहरु अतिलोकविक्रुष्ट नभएमा प्रयोगमा ल्याउन हुने भन्ने सिद्धान्त माध्यन्दिनीय-वाजसनेयिहरुका परम्परामा मान्य भएकाले र शाखाभेदले उदकदान-पिण्डदानादि-मन्त्रवाक्यहरुमा भिन्नता हुनसक्ने कुरा प्रमाणसिद्ध र अनपलपनीय भएको हुनाले पनि वैदिक-मन्त्र-सङ्ग्रहमा (पृ.६८) एकादशाहिकश्राद्धका पिण्डदानमन्त्रवाक्यमा "स्वधा नमः" इ शब्दको प्रयोग गरिएको देखिन्छ। एस विषयमा वैदिक-मन्त्र-सङ्ग्रहमा सम्बद्ध स्थलमा नै टिप्पणी दिएर राम्रो स्पष्टीकरण गरिएकै छ। बैजवाप-वाजसनेयिशाखामा त प्रेतोदकदानमन्त्रमा नै पनि स्वधाशब्दको प्रयोग विहित भएको कुरा पनि त्याँहाँ टिप्पणीमा दिइएकै छ। बैजवापवाजसनेयिशाखाको गृह्यसूत्रको पूर्ण ग्रन्थ हाम्रा दैवदुर्विपाकले गर्दा कालकवलित हुन पुगेर हो कि किन हो आजसम्म अनुपलब्ध छ। तथापि तेस ग्रन्थका अनेक धर्मशास्त्रनिबन्धग्रन्थमा छरिएका अनेक वाक्यहरु, अप्रकाशनीय र नाममात्रका शोधप्रबन्ध लेखेर डाक्टर हुनेहरुले हैन, सच्चा परिश्रमि विद्याप्रेमि गवेषकले सङ्कलित गरेका छन्। बैजवापवाजसनेयिशाखाको "तस्मिँस् त्वेकमुदकाञ्जलिम् प्रेताय दद्युरमुस्मै स्वधेति" भन्ने वचन उपलभ्यमान प्राचीनतम धर्मशास्त्रनिबन्धग्रन्थ लक्ष्मीधरकृत कृत्यकल्पतरुका शुद्धिकाण्डमा (पृ.८१), हेमाद्रिका श्राद्धकल्पमा (पृ.१५८५) र वीरमित्रोदयका शुद्धिप्रकाशमा (पृ.२००) पनि उद्धृत छ। एस स्थितिमा परशाखीय वा परशाखामूलक वचनमा प्रेतकृत्यमा

स्वधाशब्दको प्रयोग निषिद्ध छ भनेर प्रेतोदकदानवाक्यमा स्वधाशब्दको प्रयोग नगर्ने कुरा बैजवापवाजसनेयिहरुका लागि मान्य हुनसक्छ ? अवश्य सक्तैन। प्रेतैकोद्दिष्टश्राद्धका विषयमा एस्तै कुरा कात्यायनश्राद्धकल्पसूत्रानुसारिहरुका विषयमा भन्न सकिञ्छ र त्यो कुरा सम्बद्ध टिप्पणीमा भनिसकिएको पनि छ। तेस कुराको स्वशाखानुकूलत्व कात्यायनश्राद्धकल्पसूत्रका एकोद्दिष्टकण्डिकाको र पारस्करगृह्यसूत्रका तृतीयकाण्डका दशम कण्डिकाका एकादशाहकृत्यका विधानको राम्ररि अध्ययन-मनन गरेमा अज्भै स्पष्ट रूपमा बुज्न सकिञ्छ। डाक्टरमहाशयले चौदौँ-पन्द्रौँ टिप्पणीमा प्रस्तुत गरेका हेमाद्रिधृत आदित्यपुराणादिवचन तथा बौधायनवचनहरु स्वसूत्रप्रतिकूल हुनाले कात्यायन-श्राद्धकल्पानुसारिहरुका लागि प्रेतैकोद्दिष्टश्राद्धका सम्बन्धमा पनि अनुसरणीय हुँदैनन्। हेमाद्रिले उद्धृत गरेका "कृत्वा तिलोदकं पुंसां स्त्रीणां चोदितमन्त्रवत्। पितृशब्दे क्षिपेत् प्रेतं स्वधावर्जं तु सर्वतः" (पृ.१६०३) भन्ने बौधायन-वचनले पनि प्रेतोदकदानादिमा पनि पार्वणश्राद्धका अवनेजनदान-पिण्डदानादिवाक्यलाइ नै मूल आधार मानेर तिनैमा यथोचित फेरफार थपघट गरि प्रयोगमा ल्याउने कुरा वैदिकहरुमा प्रचलित भएको कुरा सूचित गरेको देखिञ्छ। *'पितृशब्दका ठाममा प्रेतशब्द राख्नू'* भन्ने अंशले त्यो कुरा स्पष्ट गरेको छ। के फेर्ने के थप्ने के घटाउने के लिने के छोड्ने भन्ने कुरा आँफ्ना-आँफ्ना शाखासूत्रअनुसार व्यवस्थित हुञ्छन्। बौधायनका शाखामा त एकोद्दिष्टश्राद्धमा धूप-दीप पनि हुँदैनन्, सभस्माग्निहवन भने हुञ्छ (च.चि., प.ख., श्रा., पृ.१६०२)। अरु शाखामा एकोद्दिष्टश्राद्धमा अग्नौकरण नहुने भएपनि ऋग्वेदिहरुका सबै प्रकारका एकोद्दिष्टश्राद्धमा अग्नौकरण अवश्य हुने कुरा पनि निर्णयसिन्धुमा उल्लिखितै छ (पृ.३११, ४१८) । ऋग्वेदिहरुमा आश्वलायनका शाखामा गन्ध-माल्यको र अर्घ्य-अवनेजनादिको प्रेतश्राद्धमा प्रयोग नहुने बुजिञ्छ (द्र.-निर्णयसिन्धु, पृ.४१५)। ति कुराको माध्यन्दिनीय-वाजसनेयिशाखामा भने निषेध छैन। एस्तो विषय नखोलि गोलमटोल गरेर प्रेतश्राद्धमा छोड्नुपर्ने भनी अर्घ, धूप, चन्दन, अवनेजन पनि देखाउने (आशौच-विवेचन, पृ.१८३) डा.महाशयले पाठकलाइ कुइराको काग बनाउन खोजेको देखिञ्छ । प्रेतश्राद्धमा नवश्राद्ध छोड्नुपर्छ भन्नुको (आशौच-विवेचन, पृ.१८३) अर्थ के हुञ्छ त्यो पनि वहिँले मात्र बुज्ने कुरा देखिञ्छ । आश्वलायन-बौधायनादिका शाखामा स्वधा-शब्दको र अभिरम्यताम्-शब्दको निषेध भएपनि माध्यन्दिनीय-वाजसनेयिशाखामा तिनको पनि निषेध छैन। तसर्थ माध्यन्दिनीय-वाजसनेयिशाखाका एकादशाहिकश्राद्धमा स्वधा-शब्दको प्रयोग स्वसूत्रप्राप्त हुनाले अवश्य गर्नपर्छ। धर्मप्रवर्तकहरुका "स्वाहा स्वधा नमः सव्यमपसव्यं तथैव च। आहुतीनां यथा सङ्ख्या साऽवगम्या *स्वसूत्रतः"* इत्यादि वचनले (श्राद्धकाशिका, पृ.४६७) पनि यो कुरा विशेष रूपमा स्पष्ट गरेकै छन्। वल्लालसेनले उल्लिखित गरेका, बङ्गालका राजगुरु अनिरुद्धले पनि एकादशाहादि-श्राद्धमा स्वधाशब्दको प्रयोग हुने कुरा मानेको देखिञ्छ (हारलता, कलकत्ता १९०८ खीष्टाब्द, पृ.१७०, पितृदयिता, पृ.४१-४४) । छन्दोगहरुका र वाजसनेयिहरुका श्राद्धप्रयोगको विशेष प्रतिपादन गर्ने बङ्गालका प्रसिद्ध धर्मशास्त्रनिबन्धकार गोविन्दानन्दले पनि "दशाहिकपदादेकादशाहादिश्राद्धेषु स्वधाशब्दप्रयोगोऽस्तीति दर्शितम्" (शुद्धिकौमुदी, पृ.१३१) इत्यादि भनेर तथा "ॐ अमुकगोत्र प्रेतामुकशर्मन्नेतत् ते दर्भासनं स्वधा" (श्राद्धक्रियाकौमुदी पृ.४०१) इत्यादि प्रयोग देखाएर एकादशाहका प्रेतश्राद्धमा पनि

स्वधाशब्दको प्रयोग हुने कुरा खोलेर देखाएका छन्। बङ्गालका ग्रन्थकार महामहोपाध्याय चन्द्रकान्त तर्कालङ्कारले पनि स्वशाखामा प्रेतश्राद्धमा स्वधापदको प्रयोग निषिद्ध नभएकाले स्वधापदले नै उत्सर्ग गरिन्छ भन्ने कुरा गोभिलपरिशिष्टान्तर्गत श्राद्धकल्पका भाष्यमा "अस्माकं तु प्रेतश्राद्धे स्वधापदस्य निषेधाभावात् तेनैवोत्सर्गः। स्वधाकारः पितॄणामित्यत्र पितृपदं प्रमीतमात्रपरम्" भनेर (श्राद्धकल्प, शक.१८३१; पृ.१४३) खोलेर भनेको पाइन्छ। माध्यन्दिनीय-वाजसनेयिहरुको एकादशाहिक-श्राद्धको पद्धतिको प्रतिपादक मूल वचन कुन हो भन्ने कुरा सम्म पनि राम्ररि नबुजेका, *'कागले कान लयो'* भन्दा आँफ्नो कान नछामेर कागका पछि दकुर्ने भनेजस्ता, स्वशाखाश्रुतिसूत्रका विधान छोडेर अनिर्ज्ञातमूल लघुस्मृति-पुराणका वचनका पछि दकुरेर धर्मकृत्य गर्नु अनिवार्य छ भन्ने, श्राद्धविषयका हाम्रा निबन्धबाट (कान्तिपुर २०५१।६।९) अरु प्राध्यापकले झैँ झट्टै नै (द्र.-कान्तिपुर २०५२।६।२) सिक्न नसकि हाम्रो आर्को निबन्ध पनि अगि नै प्रकाशित भएकामा (हिमालयटाइम्स २०५३।६।१५) आँफुलाइ अक्करपरेपछि ऐले आएर मात्र भक्खरै हाम्रा उक्त निबन्धहरुबाट केइ कुरा लिइ कुरा गर्न सिकेका र हामिले नै सर्वप्रथम प्रचलनमा ल्याएका 'लघुस्मृति पुराण' भन्ने शब्दावलि समेत प्रयोगमा ल्याउन थालेका समेत भएपनि श्राद्धमा राख्न पर्ने ब्राह्मणका सङ्ख्याका व्यवस्थाका विषयमा हामिले उक्त निबन्धहरुमा विशेष ध्यान आकृष्ट गरेकामा पनि कात्यायनश्राद्ध-कल्पसूत्रोक्त त्यो व्यवस्था अज्भै पनि बुज्न नसकेर तत्प्रतिकूल कुरा लेख्ने (अध्यात्ममासिक, वर्ष-२, अङ्क-८, २०५६ श्रावण/भाद्र; पृ.११-१३) व्यक्तिले धेरै समय लगाएर बल्लतल्ल भ्याएर शास्त्रार्थनिर्णयका लागि अनुपयोगि भावभूमिमा रहेर कनिकुथि गरेको आलोचना कसरि ठाममा पर्नसक्छ ?

एकादशाहिकश्राद्धका पिण्डदानमन्त्रवाक्यको एउटा मूल आधार कात्यायन-श्रौतसूत्रको वचन भएकाले वैदिक-मन्त्र-सङ्ग्रहमा (पृ.६८) तेस मन्त्रका अवतरणिकामा तेस वचनको स्थलसङ्केत दिइएको हो। तेस पिण्डदानमन्त्रवाक्यका अरु आधारहरुको स्पष्टीकरण तेसै वाक्यका टिप्पणीमा गरिएकै छ। शास्त्रानुकूल अनादि-परम्परा नै मान्य हुने हुँदा, शास्त्रानुकूल नभएका, वेद-वेदाङ्गादिशास्त्रको भरपर्दो अध्ययन नभएपनि राजा-रजौटाका आश्रित हुनाले बलिया प्रभावशालि र आँफुले रचेका ग्रन्थ प्रचारित गर्न समर्थ भएका ग्रन्थकारहरुका ग्रन्थले चलाएका, भ्रमादिमूलक, सादि परम्पराबाट आएका कुराहरुमा शास्त्रानुकूल संशोधन गर्नतिर विद्वज्जनको ध्यान आकृष्ट होस् र वैदिक मूल मार्गका आस्तिक सज्जनहरुले अत्यावश्यक वैदिक कर्मकाण्डको शुद्ध रूपमा प्रयोग गर्न पाउन् भनेर नै वैदिक-मन्त्र-सङ्ग्रहकारबाट उक्त ग्रन्थ प्रकाशित गर्ने व्यवस्था मिलाइएको हो। परम्परागत पद्धतिहरुका केइ अंशहरु अशुद्ध भएको कुरा त डाक्टरमहाशयले पनि स्वीकार्नुभएकै छ (मर्यादा, पृ.४५)। आँफ्ना योग्यताअनुसार वहाँले अलिकति अशुद्धि मात्र देख्न सकेकामा आर्काले आँफ्ना ज्ञानअनुसार बडि अशुद्धि पनि देख्न सक्ला। के ति अशुद्धिहरुलाइ परम्परागत कुरा भनेर बोकेरै हिँडिरनि त? तिनमा शास्त्रसम्मत संशोधन नगर्नि त? संस्कृत-विश्वविद्यालयबाट शोधपूर्णग्रन्थ प्रकाशित हुनपर्नेमा, तेसो नभै, भरपर्दो समूल अध्ययन र ग्रन्थ-प्रामाण्याऽप्रामाण्यको विचार नभएका, विवेचनमा असमर्थ र गतानुगतिक पुरेतहरुका

परम्पराबाट आएका सरौटा कर्मकाण्डपद्धतिहरु नै प्रकाशित भएको तथा पूर्वसंस्करणमा रहेका मुद्रणाशुद्धिको संशोधन गर्ने योग्यता वा जाँगर सम्म पनि नदेखाउने, "लाहुरेका गुरुबाहरु" भनिएकामध्येका व्यक्तिले तयार गरेका अस्तव्यस्त पद्धतिग्रन्थले प्रश्रय पाएको र स्वशाखाश्रुतिसूत्रादिको अध्ययनको र अनुसरणको व्यवस्थाको मेलोमेसो नपाएका पत्रकारादि अविज्ञ जनसाधारणबाट तिनको प्रशंसा गरिएको देखेर तेस्तै परिस्थितिका सुरमा विज्ञजनले पनि अनेक स्थलमा स्वशाखाश्रुति-सूत्रादिप्रतिकूल हुनाले अग्राह्य हुनपुगेका तेस्तै प्रकारका पद्धतिलाइ मूलशास्त्रसम्मत आवश्यक संशोधन विना नै अपनाउनु उचित मान्न सकिएला त? वेदाध्ययनव्यवस्थाकै अनादर गर्ने, ब्राह्मणधर्मको तिरस्कार गर्ने, धर्मको आभासीकरण गर्ने, वैदिकयज्ञको पनि राजनीतिकीकरण गर्ने, लोकप्रतारक नास्तिकहरुले स्वशाखाश्रुतिसूत्रका दृष्टिले अशुद्ध देखिएका नित्यानन्दादिकृत दर्शपूर्णमासादि-पद्धतिहरु नै विज्ञहरुका आलोचनाहरुको कुनै परवाह नगरि पद्धतिहरुमा ऊहापोह र परिष्कार गर्नपट्टि नलागेर 'जनसाधारणका आँखामा छारो हाल्न भएकै छ' भने झैँ गरेर अशुद्धै रूपमा प्रयोगमा ल्याएकामा र अविज्ञजनहरु तेस्तै कुरामा पछि लागेकामा पनि विज्ञजनले पनि "**एकोऽपि वेदविद् धर्मं यं व्यवस्येद् द्विजोत्तमः। स विज्ञेयः परो धर्मो नाऽज्ञानामुदितोऽयुतैः**" भन्ने मनुस्मृतिका (१२।११३) वचनको समेत अनादर गरि शास्त्रधर्मका विषयमा पनि अविज्ञहरुकै कामको अनुमोदन गर्नु वा अनुसरण गर्नु वा तेस्तै आयोजनामा जस्तापाइ व्यक्तिका पङ्क्तिमा मिलेर दोसल्ला ओड्न जानु समुचित मान्न सकिएला त? एकादशाहिकश्राद्धका पिण्डदानमन्त्रवाक्यमा "स्वधा नमः"-शब्दहरुको प्रयोग पनि परम्परागत पद्धतिहरुमा रहेका संशोधनीय अंशको शास्त्रसम्मत संशोधनका रूपमा नै गरिएको हो। तेसको शास्त्रसम्मतत्व सम्बद्ध टिप्पणीमा प्रदर्शित गरिसकिएकै हो। तेस टिप्पणीबाट कुरा बुज्न नसकिएको भए माथि दिइएका विवरणबाट त कुरा बुज्न इच्छा भए कुरा बुज्न अवश्यै सकिएला। कुरा बुजेर पनि बुचपचाउनेहरुको भने हामिबाट ओखति हुन सक्तैन, तिनको ओखति समयले र समाजले गर्छ। स्वशाखाका विधानलाइ नबुजेर वा तेसको अनादर गरेर परशाखीय वा परशाखामूलक वचनका सुरमा बहकिएर धर्मकृत्य गर्ने काम वैदिक मूल परम्पराको सर्वथा प्रतिकूल हो भन्ने कुरा राम्म्ररि बुज्न डा.महाशयले आँफ्नो अध्ययन धेरै नै बडाउन आवश्यक छ भन्ने कुरा एस प्रसङ्गमा स्पष्ट रूपमा देखिन आएको छ।

## गोत्र-सम्बन्ध-नामादिको उच्चारणको क्रमको विचार

*"संकल्पवाक्यमा गोत्र, स्वसम्बन्ध, नाम, जातिबोधक शब्द र स्वरूपको उल्लेख क्रमशः गर्नुपर्ने शास्त्रीय व्यवस्था छ। त्यसैभित्र रही संकल्प वाक्य बनाउनु पर्छ"* भन्ने पनि डाक्टरमहाशयको भनाइ रछ (मर्यादा, पृ.४९)। एस विषयमा लघुस्मृति-पुराणादिका वचनहरुमा नानाथरि कुरा देखिञ्छन्। तिनमा शतपथब्राह्मणमा नामको र गोत्रको क्रमैले प्रयोग गर्ने शैली देखिएकाले, एस पक्षका अनुकूल "सम्बन्धं प्रथमं ब्रूयान् नाम गोत्रमतःपरम्। रूपं ततो विजानीयादेष धर्मः सनातः" इत्यादि प्रकारका पनि अनेक लघुस्मृति-पुराणवचनहरु

पनि देखिएकाले (द्र.-श्राद्धकाशिका, पृ.४४०), याज्ञवल्क्यस्मृत्यादिमा नै पनि "नामगोत्रेण" (३।५) इत्यादि रूपका नामोच्चारण गरेर गोत्रोच्चारण गर्ने भन्ने कुराका अनुकूल वाक्यांशहरु पाइएकाले, कतै प्रचेताको र कतै पारस्करको भनिएको "गोत्र-सम्बन्ध-नामानि यथावत् प्रतिपादयेत्" भन्ने पद्यात्मक वचन गृह्यसूत्रकार पारस्करको नभै शाखासम्बन्ध निश्चित नभएका पारस्कर नामका कुनै व्यक्तिको भएको सम्भावना देखिएको हुँदा तेसको विशेष अनुसरणीयता नदेखिएकाले र उक्तवचनको र "गोत्रनामभिरामन्त्र्य" इत्यादि वचनको पनि क्रमविधानपरता नदेखिएकाले पनि स्वशाखाब्राह्मणग्रन्थका शैलीको विशेष आनुकूल्यलाइ समेत ध्यानमा राखेर वैदिक-मन्त्र-सङ्ग्रहकारबाट "अस्म्मत्पिता अमुकशर्म्मा अमुकगोत्रो वसुस्स्वरूपस् तृप्यतामेतत् तस्म्मा उदकन् तिलमिश्श्रं स्वधा नमः" भन्ने प्रयोगवाक्य (पृ.१४) देखाइएको हो। एस विषयमा वैदिक-मन्त्र-सङ्ग्रहका तेरौँ पृष्ठका १, २, ३, ४ सङ्ख्याका टिप्पणीहरु र चौदौँ पृष्ठको दोस्रो टिप्पणी द्रष्टव्य छन्। वीरमित्रोदयका श्राद्धप्रकाशमा (पृ.२९) "अत्र सम्बन्ध-नाम-गोत्र-शब्दानां नानाक्रमदर्शनाद् विकल्पः" भनेर सम्बन्ध-नाम-गोत्रहरुको उच्चारणमा जुनसुकै क्रम पनि अँगाल्न सकिने भन्ने निर्णय दिइएकाले पनि वैदिक-मन्त्र-सङ्ग्रहकारको उक्त सम्बन्धादिको उच्चारणको क्रम पनि मान्यै हो भन्ने देखिञ्छ। एस क्रमले उच्चारण गर्ने गरिएका कुराको उदाहरणका रूपमा "पितरमुकशर्म्मन्नमुकगोत्र वसुस्वरूप सपत्नीकाऽवनेनिक्ष्व" भन्ने श्राद्धमयूखको प्रयोग (पृ.११०) प्रस्तुत गर्न सकिञ्छ। श्राद्धकाशिकामा पनि "ततश्चाऽस्मत्पितरमुकशर्मन्नमुकगोत्रवसुस्वरूपेति प्रयोगः" भनिएको देखिञ्छ (पृ.४४०)। एस पक्षका समर्थक अनेक प्रमाणवचनहरु पनि श्राद्धकाशिकामा दिइएकै छन्। धर्मसिन्धुको श्राद्धप्रकरणको "अत्र कातीयानां पितरमुकनामगोत्राऽवनेनिक्ष्वेत्यादि *मन्त्राः*" भन्ने (पृ.३०८) र "एतत् तेऽस्मत्पितर् यथानामगोत्ररूप ये च त्वामनु पित्रे अमुकनामगोत्र-रूपायाऽयं पिण्डः स्वधा नमस् तेभ्यश्च गयायां श्रीरुद्रपदे दत्तमस्तु इत्यादि *मन्त्रैः*" (पृ.३०८) भन्ने प्रयोगले पनि सम्बन्धनामादिका उच्चारणको उक्त क्रमलाइ नै अनुसरण गरेको देखिञ्छ। प्रेतोदकदानादिमा सम्बन्धिवाचकशब्दको र शर्मादिशब्दको प्रयोगका विषयमा माथि लेखिसकिएकै छ। डा.महाशयले आँफुले वृत्तिका लागि पडे-पडाएको ग्रन्थ निर्णयसिन्धु मात्र पनि राम्ररि चित्त दिएर पडे-पडाएको र तेसको परिशीलन गर्दै रएको भए त्याँहाँको "सम्बन्धं प्रथमं ब्रूयाद् गोत्रं नाम तथैव च। पश्चाद् रूपं विजानीयात् क्रम एष सनातनः" (पृ.२९९) भन्ने र "सम्बन्ध-नाम-गोत्राणि इदमन्नं ततः स्वधा। पितृक्रमादुदीर्येति स्वसत्तां विनिवर्तयेत्" (पृ.३१६) भन्ने वचन सम्झँदा आँफुले बोलेको उक्त कुरा र आँफुले देखाएको गोत्राद्युच्चारणक्रम ठिक भएन कि भनेर विचार गर्ने चेतना वाँहाँलाइ अवश्य आउँदो हो। वाँहाँले पडे-पडाएका धर्मसिन्धुका उक्त प्रयोगमा पनि वाँहाँको ध्यान जाँदो हो। वृत्ति चल्यो, धन मान पाइयो, अनि पडेका र पडाउन पर्ने ग्रन्थहरुको परिशीलन केलाइ गरिरन पऱ्यो? ग्रन्थहरुको राम्रो परिशीलन नभएपछि तिनका विधानका विषयमा भ्रमात्मक धारणा जम्न जानु स्वाभाविकै कुरा हो।

## पिण्डदान-सङ्कल्पवाक्यको र पिण्डदानवाक्यको भेद

गदाधरका पद्धतिमा (पृ.४८९), विश्वनाथका प्रयोगमा (पृ.३८१) र नित्यानन्दका अन्त्यकर्मदीपकमा (पृ.३५-३६) मात्र हैन बाबुमाधवप्रसादले प्रकाशित गरेका र बालकृष्णाचार्यले प्रकाशित गरेका हाम्रा चल्तिका अन्त्यपद्धतिहरुमा पनि छुट्टाछुट्टै रूपमा उल्लिखित प्रेतपिण्डदान-सङ्कल्पका र प्रेतपिण्डदानवाक्यका भेदमा पनि दृष्टि नपुऱ्याइ, हरिहर-गदाधर-विश्वनाथहरुका प्रेतपिण्डदानवाक्यहरुमा "अद्य" वा "अद्येह" शब्द प्रयुक्त नभएका कुरामा पनि ध्यान नदिइ प्रेतपिण्डदानादि-मन्त्रवाक्यलाइ सङ्कल्पवाक्य भन्ने डाक्टरमहाशयले पिण्डदानवाक्यमा "अद्य" वा "अद्येह" शब्द राख्नु माध्यन्दिनीय-वाजसनेयिहरुका मूल शास्त्रविधानको अनुकूल कुरा हैन भन्ने कुरा राम्ररि बुज्न स्वशाखाका मूल ग्रन्थहरुको परिश्रमपूर्वक राम्ररि अध्ययन गर्न आवश्यक भएको कुरा एस प्रसङ्गमा राम्ररि नै स्पष्ट हुन आएको छ।

## वैदिक-मन्त्र-सङ्ग्रहका आलोचित सातै मन्त्रहरु स्वशाखाश्रुतिसूत्रका अनुकूल र पूर्णतया शुद्ध हुन्

माथि दिइएका विवरणबाट वैदिक-मन्त्र-सङ्ग्रहमा देखाइएका आलोचित "अस्म्मत्पितः अमुकशर्म्मन् अमुकगोत्त्रप् प्रेत एतत् त उदकम्" भन्ने शवदाहोत्तर-प्रेतोदकदानमन्त्र-समेतका सातै मन्त्रवाक्यहरु आँफ्ना शाखाका श्रुति-सूत्र-परिशिष्ट-भाष्यादिग्रन्थका पूर्णतया अनुकूल, शुद्ध र माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदशाखाध्यायि द्विजवरहरुका लागि सर्वथा ग्राह्य हुन् भन्ने कुरा स्पष्ट हुञ्छ। स्वशाखा-मन्त्र-ब्राह्मण-श्रौतसूत्र-गृह्यसूत्र-परिशिष्ट-स्मृति-पुराण-धर्मशास्त्रनिबन्धग्रन्थहरुको र नानाशाखाका नाना प्रदेशका धर्मकृत्यपद्धतिहरुको समेत अध्ययन-अवलोकन-मनन गरेर एउटा नेपालि विशिष्ट विद्वान्ले सम्पूर्ण भारतवर्षका माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदशाखाध्यायि द्विजातिका लागि आफ्नो अत्यावश्यक वैदिक कर्मकाण्डपद्धतिमा शास्त्रसम्मत संशोधन र परिष्कार गर्न प्रेरणा गर्ने गरि रचिएका र प्रकाशित गरिएका ग्रन्थमा एउटा नेपालिका नाताले पनि गौरवानुभूति गर्नपर्नेमा सो नगरि पड्नुनगुन्नु बुज्नुनसुज्नु तेसै अनर्गल कुराहरु गरेर उक्त ग्रन्थमा लाञ्छना लगाउने प्रयास गर्नु सारै नै अविवेकपूर्ण कुरा देखिञ्छ।

## वैदिक धर्ममार्गको निर्णय कस्ता व्यक्तिले गर्न सक्छन्?

माध्यन्दिनीय-वाजसनेयिशाखाका मूल मन्त्रसंहितादि ग्रन्थ गुरुमुख गरेर पड्दैनपडेका, तिनका मूल व्यवस्थाको मेलोमेसो नै नपाएका, आफ्ना शाखाका मन्त्र छोडेर तिनका ठाममा अरु नै वाक्यको प्रयोग गरेर कर्म गर्नु र स्वशाखाश्रुतिसूत्रका विधान छोडेर अनिर्ज्ञातमूल लघुस्मृति-पुराणका वचनपछि दकुर्नु अनिवार्य छ भन्ने, अर्वाचीन भ्रष्ट संशयसिन्धुग्रन्थहरुको म्लेच्छप्रवर्तित शिक्षाप्रणालीले परीक्षा उत्तीर्ण गर्न अधकल्चो शिक्षा

लिएका, वैदिक मूल धर्ममार्गका विषयमा कुइराको कागजस्तो हुन पुगेका, प्रमाणपत्रधारि धर्मशास्त्राचार्य प्राध्यापक डाक्टरमहाशयले माध्यन्दिनीय-वाजसनेयिहरुका शास्त्रीय परम्पराका विषयमा निर्णय दिन तम्सनु हास्यास्पद कुरा हो। शासकनियन्त्रित निकायका प्रकाशन-प्रचारणहरुमा शास्त्रको र धर्मको भन्दा अरु नै कुराको प्रमुखता सँधै नै रहन सक्ने कुरालाइ ध्यानमा राखेर मूल वैदिक मार्गका अनुयायि आस्तिक सज्जन माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-शाखाध्यायि द्विजवरहरुले उक्त प्रकारका व्यक्तिले दिएका हास्यास्पद निर्णयमा भर नगरि सके आँफुले पनि शास्त्र केलाएर, नसके शास्त्रधर्मरक्षापरायण आस्तिक सज्जन स्वतन्त्र अनपाश्रित्यजीवि शुद्धकुलीन स्वशाखामन्त्र-ब्राह्मण-श्रौतसूत्र-गृह्यसूत्रादि ग्रन्थ राम्ररि पडेका समुद्रपार म्लेच्छदेश नजाने आचारनिष्ठ विद्वान् ब्राह्मणहरुलाइ सोधेर शास्त्रोक्त रूपमा वैदिक धार्मिक कृत्यहरु गर्नु उचित हुञ्छ भन्ने कुरामा पनि विशेष ध्यान दिन आवश्यक देखिन आएको छ।

## वैदिक-मन्त्र-सङ्ग्रहको प्रकाशनको उद्देश्य

नेपालि उपाध्यायब्राह्मणादिमा प्रचलित वैदिक कर्मकाण्डपद्धतिहरुमा संशोधन-परिमार्जनको अत्यावश्यकताका विषयमा वैदिक-मन्त्र-सङ्ग्रहकारबाट २०४५ संवत्मा नै प्रकाशित **"वैदिक धर्म मूल रूपमा"** भन्ने ग्रन्थमा (पृ.६६) विद्वान्हरुको र आस्तिक वैदिकधर्मानुयायि सज्जनहरुको ध्यान आकृष्ट गरिएको हो। तेसमा उक्त डाक्टरमहाशयहरु जस्ता *'वाजसनेयिहरुको पूर्ण उपकार गर्ने, शास्त्रमर्मज्ञ, गहनतम एवम् प्रामाणिक ग्रन्थनिर्माता, अतिविशिष्ट विचक्षण विद्वान्हरु ऐले पनि धेरै हुँदाहुँदै'* पनि वाँहाँहरुले कुनै सुनवाइ नै नगरेजस्तो देखियो। तेसैले आँफुले यथाशक्ति गरेका स्वशाखाका वेदमन्त्रसंहिता, ब्राह्मणग्रन्थ, श्रौतसूत्र, गृह्यसूत्र, परिशिष्टग्रन्थ, प्रातिशाख्य; जैमिनीय-धर्ममीमांसाशास्त्र, बादरायणीय-ब्रह्ममीमांसाशास्त्र, स्मृति, पुराण, धर्मशास्त्रनिबन्धग्रन्थ इत्यादिका अध्ययनबाट प्राप्त ज्ञानको उपयोग नगरि प्रचलनमा रहेका अशुद्ध कर्मकाण्डपद्धतिहरुलाइ प्रयोगमा ल्याउँदै गर्नु र आसले वा त्रासले वा आलस्यले वा मोहले वा अरु नै कुनै कारणले पनि ति पद्धतिहरुका अशुद्धिहरुलाइ देख्यानदेखेइ गरेर हिण्नु र तेसै मोरेर जानु अनुचित मानि मुख्य रूपमा स्वशाखाश्रुति-सूत्रहरुको अनुकूल रूपमा सदाचारकर्म-संस्कारकर्म-श्राद्धकर्महरु गर्न-गराउन चाहाने आस्तिक माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदशाखाध्यायि निरग्निक द्विजाति सज्जन पण्डित विद्वान्हरुका उपयोगका लागि, लगभग १००० वर्ष अगिदेखि स्वशाखाकर्मकाण्डमा छाएको अन्धकारलाइ चिर्दै वैदिक-मन्त्र-सङ्ग्रहकारबाट स्वविद्या-धर्मरक्षाका लागि नै यो वैदिक-मन्त्र-सङ्ग्रहग्रन्थको रचना गर्ने काम र प्रकाशन गर्ने व्यवस्था भएको हो। एस सङ्ग्रहमा मन्त्रहरु स्वशाखाप्रातिशाख्यादिग्रन्थबाट अन्वाख्यात गुरुपरम्पराबाट आएका उच्चारण अनुरूप अत्यन्त शुद्ध रूपमा स्वरहरुका बिचका संयुक्त व्यञ्जनहरुमध्ये कुन व्यञ्जन अगाडिको र कुन व्यञ्जन पछाडिको स्वरको अङ्ग भै उच्चरित हुञ्छ भन्ने कुरा पनि स्पष्ट हुने गरि ठुला प्रयासले मुद्रित गराइएका छन्। भूमिकामा र

टिप्पणीहरुमा सम्बद्ध विषयमा शास्त्रप्रमाणपुष्ट विचारविमर्श प्रस्तुत गरिएको छ। यो ग्रन्थ प्रकाशित नगरि तेसै मोरियो भने आँफुले गरेको अध्ययन खेरा जाञ्च, तेसको विद्वान्हरुले उपयोग गर्न पाउँदैनन् भनेर नै वाँहाँबाट भरसक छिटै नै यो ग्रन्थ प्रकाशित गर्ने व्यवस्था गरिएको हो। यो ग्रन्थ परम्परागत शास्त्रीय संरचनालाइ भताभुङ्ग पार्ने वा धमिल्याउने वा जनताका आँखामा छारो हाल्ने दुर्भावनाले प्रकाशित गरिएको हैन; वैदिक कर्मकाण्डको छरितो सङ्लो शुद्ध मूल प्रवाह अर्वाचीनकालमा विविध कारणले घुसेका विभिन्न प्रकारका प्रदूषणबाट मुक्त भै मूल स्वरूपमा नै पुगोस् र सबै माध्यन्दिनीय-वाजसनेयिहरुका वैदिक धर्मकृत्यहरु स्वशाखाश्रुतिसूत्रादिका विशेष अनुसरणले परत्रमा सुफल दिने गरि सफल होउन् भन्ने सद्भावनाले गरिएको हो। एस ग्रन्थमा गरिएको प्रतिपादन बुट-बन्दुक-गुट-र-कालाधनकापुट इत्यादिका आडले गरिएको भुकाइ हैन, यो त केवल शास्त्र-धर्म-सत्य-न्याय प्रतिको सुदृढ निष्ठाको एकमात्र आधार लिएर "दैवीं वाचं स वदति यः शास्त्रमुपजीवति" भन्ने शास्त्रकार-वचनबाट प्रेरित भएर गरिएको प्रस्तुतीकरण हो। एसमा आँफ्ना जीवनकालमा नै उत्तरदायित्वपूर्ण रूपले, स्पष्टीकरणको अवसर पनि सुलभ गराउने गरेर टीका-टिप्पणी होउन् र स्पष्टीकरण दिन पाय्योस् भन्ने नै वैदिक-मन्त्र-सङ्ग्रहकारको विशेष इच्छा रैआएको छ। सन्ध्योपासन छोड्ने वा अशुद्ध रूपमा सन्ध्योपासन गर्ने ब्राह्मणले गर्ने अरु सबै वैदिक धर्मकृत्यहरु विफल हुने हुनाले र द्विजोत्तमहरुले सामान्य अवस्थामा प्रतिदिन तिनपटक अनिवार्य रूपमा सन्ध्योपासन गर्नपर्ने हुनाले समेत सारै नै महत्त्वपूर्ण रूपमा रहेको सन्ध्योपासनकृत्यका विषयमा चल्तिका पद्धतिहरुमा रहेका त्रुटिको निर्देश हुने गरि वैदिक-मन्त्र-सङ्ग्रहमा गरिएको प्रतिपादनमा छलफल गर्नुभन्दा जीवनभरमा सामान्यतया एकदुइपल्ट गरिने प्रेतकृत्यका विषयमा छलफल गर्नु बर्ता आवश्यक मानि डा.महाशयले कुरा उठाउनुभएकाले यो स्पष्टीकरण प्रस्तुत गरिएको हो । वैदिक-मन्त्र-सङ्ग्रहकारले त सन्ध्योपासनबाटै प्रारम्भ गरेर चल्तिका कर्मकाण्डपद्धतिहरुमा संशोधनका लागि विचार-विमर्श चलाउन चाहानुभएको छ र तेस विषयमा संक्षिप्त निबन्ध र विस्तृत ग्रन्थ नै पनि प्रकाशित गर्ने प्रयास पनि चलिरहेको छ। किमधिकम्। वादेवादे जायते तत्त्वबोधः। इति शम्॥

## सबैको उद्धार गर्न वेदभगवान्सित प्रार्थना

"इत्येवं श्रुतिनीतिसम्प्लवजलैर् भूयोभिराक्षालिते
येषां नाऽऽस्पदमादधासि हृदये ते शैलसाराशयाः।
किन्तु प्प्रस्तुतविप्प्रतीपविधयोऽ*प्प्यासन्नभावस्थिताः*
काले *हन्त* त्वयैव *वेद भगवँस्* ते तारणीया नराः॥"



# हाम्रा प्रकाशित ग्रन्थहरु

## (संस्कृत)

१.कतिपय-नैपाल-संस्कृतग्रन्थकार-परिचयः (२०४८) ४०।-

२.काशिनिवासिभिर्विद्वद्भिर्ब्राह्मणैर्दत्ता भारतवर्षबहिर्गमन-विधर्मि-विदेशि-सहवास-सहभोजनादि-दुरित-**प्रायश्चित्तव्यवस्था** (विस्तृतनेपालिभूमिकायुता, २०४९) ४०।-

३.कौण्डिन्न्यायनशिक्षा (प्रातिशाख्यादिसर्ववेदाङ्गशिक्षाग्रन्थसारसङ्ग्रहात्मकः समीक्षापूर्णः पुष्कलसर्वाङ्गोऽपूर्वो विपुलकायो वेदाङ्गशिक्षाग्रन्थः,२०४९) ६६०।-

४.वेदभाषानिघण्टुः (कौण्डिन्न्यायनकोषः, भूलोककाण्डान्तर्गत-देववर्ग-ब्रह्मवर्गात्मकः, २०५०) ४०।-

५.माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदशाखाद्ध्यायि-निरग्निकद्विज-सदाचारकर्म-संस्कारकर्म-श्राद्धकर्मादि-**वैदिकमन्त्रसङ्ग्रहः** (२०५२) १००।-

६.व्यावहारिकं संस्कृतम् (सचित्रं बालशिक्षार्थं प्रथमम् पुस्तकम्, २०५०) २०।-

७.व्यावहारिकं संस्कृतम् (सचित्रं बालशिक्षार्थं द्वितीयम् पुस्तकम्,२०५३) ३०।-

८.काव्यप्रकाशः (आचार्यकौण्डिन्न्यायनकृतया हैमवत्या संस्कृतव्याख्यया सहितः, मोतीलालबनारसीदासप्रकाशितः, सन् १९८०) भा.रू. १२०।-

९.पाणिनीयशिक्षा (आचार्यकौण्डिन्न्यायनकृतवेदाङ्गशिक्षाविमर्शाख्यव्याख्यासहिता, वाराणसीस्थचौखम्बाविद्याभवनप्रकाशिता, सन् १९९८) भा.रू. ४०।-

## (नेपालि)

१.वृत्तनक्षत्रमाला (छन्दोग्रन्थ, २०२८) १।-

२.जिम्दो नेपालि भासा (पैलो खण्ड, भाषाव्याकरणदर्शनसम्बन्धि ग्रन्थ, २०३०) ३।१०

३.जिम्दो नेपालि भासा (दोस्रो खण्ड, २०३७) १०।-

४.नेपाली वर्णोच्चारणशिक्षा (साझा प्रकाशन, २०३१) ११।२५

५.वैदिक धर्म मूल रूपमा (वैदिक धर्मको संक्षिप्त सर्वाङ्गीण र प्रामाणिक परिचय,२०४५) १००।-

६.संवैधानिक हिन्दुराज्यको चरित्र र आवश्यकता के कस्तो ? (२०४७) २।-

७.नेपालमा लोकतन्त्र दरो र दिगो कसरि होला ? (२०४७) २।-

८.वैदिक-समाजवादि-लोकतान्त्रिक-संस्कारप्रवर्धनसभाको आह्वान तथा उद्देश्य सिद्धान्त र कार्यक्रम (२०४७) १।-

९.वैदिक-सनातन-वर्णाश्रम-धर्म (हिन्दुधर्म) र एसका उपज अरु उपधर्महरु तथा स्वधर्मरक्षाका लागि वर्णाश्रमधर्माऽनुयायिहरुको कर्तव्य (२०४७) १।-

१०.संस्कृतवाङ्मयको महत्त्व, नेपालमा संस्कृतवाङ्मयको संरक्षण-संवर्धनको प्रयास, संस्कृत-शिक्षाको वर्तमान शोचनीय अवस्था तथा तेस अवस्थाको निराकरणको मार्ग (२०४८) २।-

११.संस्कृतशिक्षालाइ सर्वजनोपयोगि साधारणशिक्षाका रूपमा समेत विकसित गरि सरल, सन्तुलित, वैज्ञानिक,सर्वतोमुख र लोकोपयोगि तथा लोकग्राह्य बनाएर दिन लिन आह्वान (२०५०) (निश्शुल्क)

१२.तनहुँ-चुँदि-रम्घा-बिसिको भानुसंस्कृतमाध्यमिकविद्यालयको स्वर्णजयन्तीको रहस्य (२०५५) (निश्शुल्क)

१३.संस्कृत-संस्कृति-सामान्यज्ञान-प्रश्नोत्तरसङ्ग्रह (२०५५) १०।-

१४.स्वाद्ध्यायशालाकुटुम्बको स्वधर्म सन्देश (१) वैदिक-सनातन-वर्णाश्रमधर्मका मूल सिद्धान्तसूत्रहरु (२०५६) (निश्शुल्क)